श्रीश्रीधरस्वामीप्रणीत–

# श्रीमद्भागवतमहापुराणको अवतरणिकाको नेपाली अनुवादसहित

लेखक
शरत्कुमार भट्टराई

श्रीश्रीधरस्वामी प्रणीत–

# श्रीमद्भागवतमहापुराणको अवतरणिकाको नेपाली अनुवाद सहित

# भागवतप्रति भगवन्मयी भावना

श्रीमद्भागवताख्योऽयं प्रत्यक्षकृष्ण एव हि ।
स्वीकृतोऽसि मया नाथ मुक्त्यर्थं भवसागरे ॥

**भगवन्मय भागवत**

वास्तवमा भन्ने हो भने श्रीमद्भागवत महापुराण साक्षात् भगवत्स्व नै हो । यस विषयलाई परिपोषण गर्ने सयुक्तिक वचन भागवतमा नै प्रशस्त पाइन्छन् । जस्तै भगवान् श्रीकृष्णको आफ्नो लीलामय विग्रहलाई चिन्मय विग्रहमा परिणत गर्ने दृढ सङ्कल्पलाई बुझेर उद्धवले एकान्तमा आफ्नो अभिप्राय कृष्णसँग यसरी व्यक्त गर्नुभयो ।[१] हे गोविन्द ! तपाईंले आफ्ना भक्तहरूको कार्य सम्पन्न गरेर आफू आफ्नो चिन्मय विग्रहमा परिणत हुने अठोट गर्नुभएको छ । यस विषयलाई लिएर मेरा मनमा ठूलो चिन्ता प्रकट भयो । किनकि ? यो पृथिवीमा अब घोर कलियुगको प्रवेश हुँदै छ । कलियुग प्रवेश भएपछि यस पृथिवीमा दुष्टहरूको साम्राज्य हुनेछ । ती दुष्टहरूका संसर्गले गर्दा सज्जनहरू पनि किंकर्तव्यविमूढ हुने छन् । त्यस समयमा दुष्टहरूका दबाबले दबेकी पृथिवी माता गाईको रूप धारण गरेर कस्को शरणमा जालिन् ? हे कमलनयन ! हजुर बाहेक यी पृथिवी र पृथिवीमा वसोवास गर्ने भक्तहरूको रक्षा गर्ने म अरू कोही पनि देख्दिन ।

यस्ता पवित्र भावनाले ओतप्रोत भएका भक्त उद्धवका वचन

---

१. त्वं तु यास्यसि गोविन्द ! भक्तकार्यं विधाय च ।
मच्चित्ते महती चिन्ता तां श्रुत्वा सुखमावह ॥ – भा.मा.३।५५

सुनेर भगवान्ले भन्नुभयो – हे उद्धव ! मैले तिम्रो पवित्र भाव पर्याप्त रूपमा बुझेको छु । म यहाँबाट अन्तर्धान भएर कहीं अन्यत्र जाने होइन अपितु तिमीहरू सबैका कल्याणका लागि चिन्मय विग्रहवान् भएर सदा श्रीमद्भागवतमा रहने छु । त्यसकारण श्रीमद्भागवतको भक्तिपूर्वक अध्ययन अध्यापन गर्नाले मलाई यहीं तत्काल साक्षात् अनुभव गर्ने छौ । यसरी उद्धवलाई आश्वस्त गराएर भगवान्ले आफूमा विद्यमान चिन्मय तेज श्रीमद्भागवतमा राखेर अन्तर्धान हुनुभयो । त्यसकारण यो भागवत भगवान्को [२]साक्षात् विग्रह हो । अतः यसको सेवन, श्रवण, पठन पाठन र दर्शन गर्नाले मात्र पनि पाप नाश हुन्छन् । यतिमात्र नभएर जसका घरमा भागवतको पुस्तक छ त्यो घर घर नभएर मन्दिर हुन्छ ।

स्वल्पज्ञ हामीहरूलाई संझाउनका लागि भागवतको रचना प्रक्रिया प्रदर्शन गरिए तापनि वास्तवमा वेदव्यासले भागवतको रचना गर्नुभएको होइन । किन्तु स्मरण गर्नुभएको मात्र हो । '[३]**समाधिनाऽनुस्मर तद्विविचेष्ठितम्**' । भागवतको विशेषणको रूपमा [४]ज्ञानप्रदीपः र भगवान् नारायणको विशेषणको रूपमा [५]सर्वबुद्धिदृक् [६]अध्यात्मदीपः जस्ता शब्द प्रयोग हुनुबाट पनि भगवान् र भागवतमा अभेद सिद्ध हुन्छ । यस्ता भगवन्मय भागवतका चार परम्पराहरू

---

२. तेनेयं वाङ्मयी मूर्तिः प्रत्यक्षा वर्तते हरेः ।
सेवनाच्छ्रवणात् पाठाद् दर्शनात् पापनाशिनी ॥ – भा.मा. ३।६२

३. भा. १।५।१३ ४. भा. १२।१३।९

५. भा. १०।३।१३ ६. भा.१०।३।२४

७. कस्मै येन विभाषितोऽयमतुलोज्ञानप्रदीपः पुरा
तद्रूपोण च नारदायमुनये कृष्णाय तद्रूपिणा ।
योगीन्द्राय तदात्मनाथ भगवद्राताय कारूण्यत–
स्तच्छुद्धं विमलं विशोकममृतं सत्यं परं धीमहि ॥ – भा.१२।१३।१९

शास्त्रमा प्रसिद्ध छन् । ती चार परम्परा हुन् – [७]नारायणी परम्परा, [८]साङ्कर्षणी परम्परा, [९]शाङ्करी परम्परा र [१०]कार्ष्णी परम्परा ।

यस्ता परम्परा चतुष्टयविशिष्ट श्रीमद्भागवतमा नास्तिक एवं आस्तिक दर्शनका सबै सिद्धान्तको सङ्केत प्रायः पाइन्छ । त्यसकारण पनि भागवतलाई वेदरूपी [११]कल्पवृक्षको पाकेको फल भनेको हो । जसरी वेद कल्पवृक्ष हो त्यसरी नै भागवत पनि कल्पवृक्ष भन्दा कम छैन । तव न द्वैत, अद्वैत, विशिष्टाद्वैत, द्वैताद्वैत, शुद्धाद्वैत, भावाद्वैतवादी, चार्वाक, जैन, बौद्ध सबैले आ-आफ्नो सिद्धान्तलाई परिपोषण गर्ने प्रमाणको रूपमा प्रायः भागवतकै पङ्क्ति प्रस्तुत गर्दछन् । यसरी पक्षपात निरपेक्ष भएर हेर्दा भागवतमा सबै सिद्धान्तको सुमधुर समन्वय पाइन्छ । जीव र ब्रह्मको एकतारूप अद्वितीय सद्वस्तुको प्रतिपादन गर्ने सन्दर्भमा जसरी भागवतले

---

८. प्रोक्तंकिलैतद्भगवत्तमेन निवृत्तिधर्माभिरताय तेन
सनत्कुमाराय स चाह पृष्टः साङ्ख्यायनायाङ्ग धृतव्रताय ।
सांख्यायनः पारमहंमुख्यो विवक्षमाणो भगवद्विभूतीः
जगाद सोऽस्मद् गुरवेऽन्विताय पराशरायाथ बृहस्पतेश्च ॥
प्रोवाचमह्यं स दयालुरुक्तो मुनिः पुलस्त्येन पुराणमाद्यम्
सोऽहं तवैतत्कथयामि वत्स श्रद्धालवे नित्यमनुव्रताय ॥ – भा.३।८।७–९

९. ततोऽमरकथां शम्भुः श्रीमद्भागवतांभिधाम् ।
महेशान्यै विधायादौ समयञ्च जगाद हं ॥ – कौशितकी सं. ५।११

१०. ईक्षाञ्चक्रे यदा कृष्णो मायापुरुषरुधृक ।
ब्रह्मा विष्णुः शिवश्चापि रजसत्त्व तमोगुणैः ॥ – स्कन्द पु. भा. माहात्म्य ३।२१
यदा तु भगवांस्तस्मै श्रीमद्भागवतं पुरा ।
उपदिश्याब्रवीद् ब्रह्मन् स्वेवस्वैनत् स्वसिद्धये ॥ – स्कन्द पु. भा.मा. ३।२५
तस्मा अपि पुमानाथ श्री भागवतमादिशत् ॥ – स्कन्द पु. भा.मा. ३।३३
श्रीमद्भागवतं तस्मा अपि नारायणो ददौ ॥ – स्कन्द पु. भा.मा. ३।४१

११. निगम कल्पतरोर्गलितं फलम् ... । – भा.१।१।३

अद्वैतेतर सिद्धान्तलाई तोडमोड नगरी जस्ताको तस्तै उपस्थापन गर्दै आफ्नो अभीष्ट 'कैवल्यैक प्रयोजन' सिद्ध गरेको छ त्यसरी नै श्रीधरी टीकाले पनि भागवतको मर्मलाई मर्न नदिई भागवतको गूढ रहस्यलाई खोलिदिएको छ ।

२. **श्रीधरी टीकाको विशेषता**

श्रीमद्भागवतमहापुराणको तात्पर्य ख्यापन गर्नका लागि विभिन्न विद्वान्हरूले भागवतको टीका लेख्नुभएको छ । ती सबै टीकाहरूमध्ये श्रीधराचार्यकृत भावार्थदीपिकाको सर्वोपरि महत्त्व छ । निष्पक्ष भएर भन्ने हो भने श्रीधरीटीकाविना भागवतको तात्पर्य प्रकाशित हुन सम्भव छैन भन्दा अतिशयोक्ति हुँदैन ।

श्रीधराचार्यकृत भावार्थदीपिका टीकाप्रति सबैको विश्वास हुनुमा यो आप्तवचन प्रसिद्ध छ– श्रीमद्भागवतको टीका लेख्ने विद्वान्हरू श्रीधराचार्यका समवर्ती एवं पूर्ववर्ती धेरै थिए तापनि भावार्थ दीपिकाको दाँजोमा पुग्न नसकेपछि ईर्ष्याको दास भएर भन्न थाले कि – श्रीधरीटीका श्रीमद्भागवतका द्रष्टा एवं स्रष्टा वेदव्यासको अभिप्राय अनुरूप छैन । यो त अद्वैत सिद्धान्तलाई सर्वोपरि सिद्ध गर्ने साधन मात्र हो । वास्तवमा भागवतको मर्म बुझाउने प्रयासभन्दा पनि अद्वैतसिद्ध गर्ने कर्म श्रीधराचार्यकले गरेका छन् । तसर्थ यो टीका हामीहरूलाई मान्य छैन । यो विवाद यत्र तत्र सर्वत्र फैलँदै विश्वनाथ बाबाका अनन्य उपासक काशीका विद्वान्का कानमा पुग्यो । यो कुरा सुन्नासाथ ती विद्वान्हरूले शास्त्रोक्त युक्तिपूर्वक त्यो विवाद समाधान गर्ने प्रयास गर्दा पनि सम्झाउन एवं बुझाउन सफल नभएपछि त्यहाँ सबैको सर्वमान्य निर्णय भयो कि ! अब यो विवाद समाधान गर्नका लागि विश्वनाथ बाबाका शरणमा जाने । त्यसपछि सबै टीकाकारहरू आ-आफ्ना टीकाले सहित भएका भागवतका पुस्तकहरू लिएर विश्वनाथका मन्दिरमा जानुभयो । सायंकालिक आरती एवं पुष्पाञ्जलि सम्पन्न भएपछि ती सबै टीकाले सहित भएका भागवतका पुस्तकहरू भगवान्

विश्वनाथका मन्दिरभित्र खप्टिएर राखियो । संयोगवश श्रीधरीटीकाले विभूषित भएको भागवतको पुस्तक सबैभन्दा तल र अरू पुस्तकहरू क्रमशः माथि राखेर ढोका बन्द गरी ढोकामा साँचो लगाइयो । भोलिपल्ट बिहान स्नानादि कार्य सम्पन्न गरेर सबैले सामूहिक रूपमा मन्दिरमा ताल्चा खोलेर हेर्दा त त्यहाँ सबैभन्दा तल राखिएको श्रीधरी टीकासम्पन्न भागवतको पुस्तक सबैभन्दा माथि रहेको र त्यो पुस्तकमा भगवान् विश्वनाथकै हस्ताक्षरको रूपमा यो लेखिएको थियो –

व्यासो वेत्ति शुको वेत्ति राजा वेत्ति न वेत्ति वा ।
श्रीधरः सकलं वेत्ति श्रीनृसिंहप्रसादतः ॥

अर्थात् श्रीमद्भागवतको तात्पर्य व्यासले बुझेका छन् । शुकदेवस्वामीले बुझेका छन् । राजा परीक्षित्ले बुझे वा बुझेनन् त्यो संशयकै विषय छ । तर श्रीधराचार्य स्वामीले श्रीनृसिंह भगवान्का कृपाले गर्दा स्पष्ट बुझेका छन् । यस विषयमा संशय छैन ।

यस्तो महत्त्वपूर्ण टीका लेख्दा श्रीधराचार्यले प्रत्येक अध्यायको शुभारम्भमा सम्पूर्ण अध्यायको सार समेटेर श्लोक लेखिदिनु भएको छ। ती श्लोकहरूमा अध्यायसार अवतरण भएको हुनाले ती श्लोकहरूको नाम अवतरणिका रहन गएको हो । संस्कृत भाषामा निबद्ध ती प्रौढ तथा पाण्डित्यपूर्ण अवतरणिकाका श्लोकहरूलाई समच्छन्दमा नेपाली भाषामा अनुवाद गर्ने कार्य साहित्य जगत्का ख्याति प्राप्त विद्वान् श्रीशरत्कुमार भट्टराईज्यूबाट सम्पन्न भएको सन्देश सुन्न र पढ्न पाउँदा पाठकवर्गको हृदय प्रफुल्लित हुनु स्वाभाविकै हो । भट्टराईजी स्वयंमा प्रसिद्ध कवि परिवारको सदस्य हुनुहुन्छ भन्ने कुरालाई प्रमाणित गर्न उहाँको सद्यः प्रकाशित कवितामञ्जरी नै पर्याप्त छ । ज्ञान र भक्ति, रासपञ्चाध्यायी, तीर्थहरूको यात्रावृत्तान्त, ब्रह्मसाक्षात्कार, उपनिषत्सार, ब्रह्मसूत्रसार, मणिरत्नमाला प्रश्नोत्तरीको अनुवाद, ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री, वेदान्तपरिभाषासार, श्रीकृष्णायवयं नुमः, परमसत्य, अध्यास, अद्वैत सिद्धि नेपाली अनुवादसहित प्रथम खण्ड, अद्वैतसिद्धि नेपाली

अनुवादसहित द्वितीय खण्ड, अन्तिम उपदेश, ब्रह्मविद्या, पराविद्या, अजातवाद, औपनिषद् पुरुष, ब्रह्मानुभूति, आभास, स्रष्टा र दृश्य, ऋते ज्ञानान्नमुक्तिः जस्ता दार्शनिक एवं साहित्यिक कृतिहरूले प्रमाणित गर्दछ कि उहाँ साँच्चै नै वेदान्त दर्शनको मात्र नभएर साहित्यिक एवं पौराणिक जगत्को पनि आधिकारिक विद्वान् हुनुहुन्छ। किनकि उहाँले त्यो विद्वत् कविपरिवारबाट रोपिएको विद्याको बीजलाई पद, वाक्य, प्रमाणज्ञ प्रकाण्ड विद्वान् पद्मप्रसाद भट्टराई गुरु जस्ता सुयोग्य गुरुका सान्निध्यमा रहेर अङ्कुरित गर्ने सुअवसर प्राप्त गर्नुभो भने प्रा. गोपाल निधि गुरुहरू जस्ताका सामीप्यमा रहेर पल्लवित गर्ने सौभाग्य प्राप्त गर्नुभयो । जसको फलस्वरूप हुने विरुवाको चिल्लो पात भने झैँ आफ्नो प्रारब्ध कर्मानुसार तीसौँ वर्षसम्म प्रशासनिक जगत्मा विचरण गर्दा पनि भट्टराईजीले साहित्यिक एवं दार्शनिक साधनालाई सधैँ फलीभूत पारेको कुरा उहाँले तत्तत्समयमा लेखेका कविता, दार्शनिक एवं साहित्यिक लेखहरूले नै प्रमाणित गर्दछन्। सरकारको उच्च पदमा कार्यरत छँदादेखि नै सम्पूर्ण कामना र एषणात्रयबाट क्रमशः विनिर्मुक्त हुँदै स्वकर्तव्य निर्वाह गर्ने बानी भएका भट्टराईजी वर्तमान परिप्रेक्ष्यमा पनि आफू कसैबाट प्रदत्त उपाधि, पुरस्कार, सम्मान र पारिश्रमिकसमेत पनि ग्रहण नगर्ने तर अरू सुयोग्य विद्वान्हरूलाई भने सधैँ सम्मान गर्ने दृढ सङ्कल्पवान् व्यक्तित्वको रूपमा सुपरिचित हुनुहुन्छ।

विशेष गरेर अद्वैत वेदान्तका अत्यन्त दुरूह र अप्राप्य आकर, प्रकरण, विवरण, वृत्ति र अरू ग्रन्थहरूको पनि अध्ययन, अनुशीलन र विवेचन समेत गरेर सकेसम्म सबै पाठकहरूले बुझ्ने गरी सरल एवं सुबोध शैलीमा कविता लेखन कार्यमा सिद्धहस्त प्रसिद्ध साहित्यकार कवि श्रीशरत्कुमार भट्टराईद्वारा समच्छन्दमा अनूदित यो कृतिमा श्रीधरस्वामीले जसरी भागवतका प्रत्येक अध्यायको विषयवस्तुलाई सूत्ररूपमा १–२ श्लोकभित्र समेट्नु भएको छ त्यसरी नै कविजीले संस्कृत श्लोकले समेटेको विषयलाई नछोडिकन नेपाली भाषामा

रूपान्तरित गर्नुभएको छ। जस्तै –

संस्कृत – तदेवं प्रथमेऽध्याये षट् प्रश्ना मुनिभिः कृताः ।
द्वितीये तूत्तरं सूतश्चतुर्णामाह तेष्वथ ॥

नेपाली – पैलोमा मुनिले प्रश्न ६ ओटा गर्दछन् अनि ।
दोस्रोमा प्रश्न चाडाका सूतले भन्दछन् पनि ॥

संस्कृत – अवतारकथा प्रश्ने तृतीये तूत्तराभिधा ।
पुरुषायवतारोक्त्या तत्तच्चारिचत्रवर्णनैः ॥

नेपाली – अवतार कथा प्रश्न तेस्रोमा हुन्छ उत्तर ।
चरित्र ईशको सारा कथा सङ्क्षिप्त सुन्दर ॥

यसरी नै द्वादशस्कन्धको पाँचौँ अध्यायको सन्दर्भमा भन्नुहुन्छ –

संस्कृत – पञ्चमे तु समासेन परब्रह्मोपदेशतः ।
राज्ञस्तक्षक संदंशान्मृत्युभीति निवारणम् ॥

नेपाली – पाँचौँमा अति नै सूक्ष्म ब्रह्मोपदेश दीकन ।
सर्प दंशनको त्रास राजाको भो निवारण ॥

यसरी परिश्रमका साथ जस्ताको तस्तै सुबोध शैलीमा अनुवाद गरेर तयार पार्नुभएको यो कृति केवल सामान्य पाठकका लागि मात्र पठनीय नभएर वर्तमान समयका कथाकारहरूका लागि पनि पठनीय छ भन्ने म ठान्दछु ।

अन्त्यमा पद र प्रतिष्ठाको आकर्षणभन्दा माथि उठेर यस प्रकारका ग्रन्थहरूको रचना एवं प्रकाशन गर्ने सन्मति र शक्ति अनाथ-नाथ भगवान् पशुपतिनाथबाट कविज्यूलाई प्राप्त होस् भन्ने कामना गर्दै भागवतप्रति भगवन्मयी भावना व्यक्त गर्दछु । अस्तु परिपूर्णम् ।

"ॐ शान्तिः शान्तिः शान्तिः"

वसन्तपञ्चमी
२०७४।१०।८

प्रा. भवानीप्रसाद खतिवडा
वेदान्त विभागाध्यक्ष
वाल्मीकि विद्यापीठ



# भूमिका

सन् १२२० मा प्रत्यक्तत्त्वप्रदीपिकाकार चित्सुखाचार्यको समय हो भनिन्छ। चित्सुखाचार्य भगवान् श्रीनृसिंहका भक्त उपासक हुनुहुन्थ्यो। त्यसका प्रमाणका रूपमा चित्सुखी अर्थात् तत्त्वप्रदीपिकामा आएको मङ्गलाचरण श्लोकलाई लिन सकिन्छ। जस्तै –

**स्तम्भाभ्यन्तरगर्भभावनिगदव्याख्याततद्वैभूवो,**
**यः पाञ्चाननपाञ्चन्यवपुषा व्यादिष्टविश्वात्मनः।**
**प्रह्लादाभिहितार्थतत्क्षणमिलद्दृष्टप्रमाणं हरिः,**
**सोऽव्याद्वः शरदिन्दुसुन्दरतनुः सिंहाद्रिचूडामणिः॥**

त्यसै गरी सन् १४०० तिरका श्रीश्रीधर स्वामी पनि श्रीनृसिंह भगवान्का भक्त उपासक हुनुहुन्थ्यो। उहाँले श्रीमद्भागवतमहापुराणको भावार्थदीपिकाटीकाको रचना गर्दा चित्सुखाचार्यले जस्तै त्यसै गरेर मङ्गलाचरण श्लोकमा भगवान् श्रीनृसिंहको स्तुति गर्नुभएको छ। जस्तै –

**वागीशा यस्य वदने लक्ष्मीर्यस्य च वक्षसि।**
**यस्याऽऽस्ते हृदये संवित्तं नृसिंहमहं भजे॥**

यसरी विचार गर्दा चित्सुखाचार्य र श्रीधरस्वामी दुवै एउटै विचार, गुरुपरम्परा र सम्प्रदायका अनुयायी भएको उहाँको भावार्थदीपिका नामक टीकामा आएको प्रतिज्ञा वाक्यबाट व्यक्त भएको अनुमान गर्न सकिन्छ –

**सम्प्रदायानुरोधेन पौर्वापर्यानुसारतः।**
**श्रीभागवतभावार्थदीपिकेयं प्रतन्यते॥**

यस अनुसार विचार गर्दा श्रीधरस्वामी पनि चित्सुखाचार्य

जस्तै अद्वैत सम्प्रदायका सन्न्यासी भएको देखिन्छ। यसैकारणले नै भागवतको उहाँको भावार्थदीपिकाटीका प्रामाणिक अद्वैतवेदान्तपरक व्याख्या भएको कुरामा भागवतका सबै अध्येता विद्वान्हरू सहमत देखिनुहुन्छ। स्वामीजीको जन्मभूमि, माता, पिता र अन्य विवरणका सम्बन्धमा 'भक्तमाल ग्रन्थ'को कल्याण पत्रिकाद्वारा सन् २०१३ को विशेषङ्कमा केही तथ्य प्रकाशन गरेको छ। जसको सारसङ्क्षेप यस अनुसार छ –

दक्षिण भारतको कुनै नगरमा एउटा बालकको गृहस्थ ब्राह्मणको घरमा जन्म भएको थियो । तर उनका मातापिताको चाँडै मृत्यु हुनगएछ। त्यस समयका राजाका मन्त्रीले अनाथ तथा टुहुरो ब्राह्मणबालकमाथि दया र स्नेह गरेर भगवान् श्रीनृसिंहको दीक्षा दिएर आराधनामा लगाएछन् । उनको आराधना र भजनबाट अत्यन्त सन्तुष्ट भएर भगवान् नृसिंहले ब्राह्मण बालकलाई वरदान दिँदै भन्नुभएछ – "तिमीलाई वेद, वेदाङ्ग, दर्शनशास्त्र आदिको सम्पूर्ण ज्ञान होला र मेरो भक्ति तिम्रो हृदयमा निवास गर्ला" आदि । त्यस प्रकार अलौकिक तथा दिव्य वरदान भगवान्बाट प्राप्त गर्ने भाग्यमानी बालक, जो पछि गएर असामान्य प्रकाण्ड विश्वप्रसिद्ध विद्वान् भए तिनै श्रीश्रीधरस्वामी हुनुहुन्थ्यो। विद्वान् तथा राजा समेतबाट सम्मानित भएर धनधान्य सम्पन्न समेत उहाँ हुनुभएछ। उहाँको विवाह पनि भएछ, तर केही समयपछि प्रथम सन्तानको जन्म दिएपछि उहाँकी पत्नीको मृत्यु भएछ।

यसलाई उहाँले भगवान्को कृपा नै संझिनुभएछ। यसबाट उहाँमा वैराग्य झन् प्रबल भएछ। आफ्नो नवजात बालकलाई भरणपोषणको अभिभारा कुनै दयालु मानिसको जिम्मामा सुम्पेर उहाँ काशी जानुभएछ।

काशी गएर भगवान्को भक्ति, भजन र आराधनामा श्रीश्रीधरजी

भन् सघनरूपमा संलग्न हुनुभएछ। अध्ययन, अध्यापन र टीकालेखन समेतका ग्रन्थहरूको प्रणयनमा पनि संलग्न उहाँ भएको देखिन्छ। उहाँका रचनाहरूमा श्रीमद्भगवद्गीता, श्रीविष्णुपुराण र श्रीमद्भागवत महापुराणका टीकाहरूसमेत लेख्नुभएको पाइन्छ। जुन टीकाहरू अत्यन्त विद्वत्तापूर्ण, शास्त्रसम्मत र सबै सम्प्रदायबाट आदृत समेत भएको मानिन्छ। केही व्यक्तिहरूबाट विरोध भएकोमा टीकाको स्वयम् श्रीनृसिंह भगवान्‌बाट नै स्वीकृति आएपछि सबै नतमस्तक भएका थिए भनिन्छ। श्रीधरस्वामीले श्रीमद्भागवतको भावार्थदीपिकाटीका लेख्ने सन्दर्भमा कतै कुनै श्लोकमा अर्थ स्पष्ट गर्न नसकेमा त्यस अंशलाई अपूर्ण छोडेर रातमा उहाँ सुत्नुहुन्थ्यो अरे, तर त्यस अपूर्ण अंशलाई भगवान् श्रीनृसिंहले रातमा नै लेखेर पूर्ण गरिदिनुहुन्थ्यो भनिन्छ। त्यसका साथै श्रीधरस्वामी भगवान् व्यास र श्रीशुकदेव स्वामी जस्तै भागवतका परम ज्ञाता भएको प्रमाणित गर्दै एउटा श्लोकको रचना पनि स्वयं भगवान् श्रीनृसिंहबाटै भएको हो भन्ने भनाइ पनि विद्वान्‌हरूको पाइन्छ। जुन यस प्रकार छ –

**व्यासो वेत्ति शुको वेत्ति राजा वेत्ति न वेत्ति वा।**
**श्रीधरः सकलं वेत्ति श्रीनृसिंहप्रसादतः ॥**

श्रीधरस्वामीका सम्बन्धमा अङ्ग्रेजी भाषामा लेखिएको टिप्पणीबाट पनि उहाँको सम्बन्धमा केही बढी जानकारी हुनसक्ने ठानेर यहाँ दिइन्छ। जुन यसप्रकार छ –

"A number of Commentaries supporting different schools of philosophical thought have written commentaries upon the Bhagavata Purana. Each of the commentators has tried to show that the Bhagavata Purana supports his school of thought. Of these Shreedhar Svamin is the commentator most celebrated in the Bhagavata circles. According to his own statement, he has given us the traditional interpretation of the Bhagavata, implying

that he followed Chitsukha commentary on the Bhagavata. By the consensus of opinion among schoolars, Chitsukha lived in 1220-84 A.D. If by Paramparya Shreedhara refers to the tradition of Chitsukha, then Shreedhara's date falls some time in the middle of the forteenth century A.D.

Shreedhara is regarded as the commentator par excellence. He is said to have full knowledge of the Bhagavata (Shreedharah sakalam vetti). He is not merely a literal interpreter but a well versed exegist, who understands the working of Souksma-Shareera better than any philosopher, like a yogi who has realized soul. Commenting on Bh. XI.22.39 Shreedhar regards man's as the linga-shareera and holds that self follows manasinfested with egoism. He further holds that through the destiny of karma and manas meditates over things seen and heard and gradually loses memory with regard to him. When manas enters into another body it ceases to remember the experiences of previous existence. Death is but an absolute forgetfulness of things seen and heard by manas."

श्रीश्रीधर स्वामीको भावार्थदीपिकाटीका र उहाँका समयका सम्बन्धमा एकजना विद्वान्ले भगवतको भूमिकाका रूपमा संस्कृत भाषामा लेख्नुभएको टिप्पणी निम्न अनुसार दिइन्छ –

**श्रीधरीटीकायाः प्रामाण्यप्रसङ्गः** – “नेयं टीका कपोल-कल्पनाकल्पिताऽन्तःकरणमात्र, अत्र चत्वारो वेदाः स्मृतयः पुराणानि' दर्शनानि 'शिक्षाकल्पादीनि वेदाङ्गानि', विविधकोषोद्धर-णानि च प्रमाणत्वेन पदे पदे प्रदत्तानि सदेतस्या टीकाया माहात्म्यं स्थाने समुद्भावयन्ति । श्रीधरीनाम्नीयं टीका क्लिष्टस्थलविशेषेषु सङ्क्षेपविस्ताराभ्यां लिखिता यथास्थानं विलसति। अनया एव टीकया परवर्तिटीकाकाराः स्वस्वटीकाकरणे समर्था जाताः । यथा महाकविः कालिदासः कथितवान्– '**मणौ वज्रसमुत्कीर्णे सूत्रस्येवास्ति मे गतिः**'। (रघु.प्रथमसर्गेः)।श्रीधरीटीकाया अनन्तरमेतादृशी एव स्थितिः

परवर्तिटीकाकाराणां समजनि, तथाप्यत्र कतिपयधार्मिकसम्प्रदायवताम् अमुष्यव्याख्यानसम्बन्धे समर्थनं तदितराणां कतिपयानां विरोधेऽपि चक्षुषोरग्रे परिस्फुरति ।

**तत्र विरोधहेतुः स्पष्टीक्रियते** – धार्मिकक्षेत्रे बहुविधाः सम्प्रदायाः सन्ति ते स्वान् स्वान् सिद्धान्तान् स्वीकृत्य स्वे स्वे पथि प्रवृत्ता भवन्ति, अयमेव मूलतो विरोधहेतुः । श्रीमद्भागवतं पुराणम् अद्वैतज्ञानस्य भक्तिरसस्य च मधुरं सरसं कर्णपेयञ्च रसायनं पाययति भुवि भक्तिभावभरितान् भावुकान् । अद्वैतसिद्धान्तविरोधकसम्प्रदायानुसारिणस्ते त आचार्य एनां टीकां परिहसन्ति, ते कामं हसन्तु नाम, नैतेन मनागपि टीकाकर्तुः स्खलनं सिद्ध्यति ।

दशमस्कन्धान्तर्गताः श्रीकृष्णस्य पूतनादिवधरूपाया रहस्यमय्यः कथा विलसन्ति ताः सर्वा अपि तत्तदर्थप्रतिपादिकाः श्रुतिसम्मता एव, येषां विवरणं यथास्थानं टीकाकारेण समुपन्यस्तम् । अस्मिन् दशमस्कन्धे ब्रह्मस्तुतिः, युगलगीतं, रासोपक्रमः, तत्र श्रीकृष्णस्य सहसाऽन्तर्धानप्रकारः, एते विषया विशेषतया महत्त्वपूर्णाः सन्ति, एतेषां रसास्वादनकारयित्री मूलतः श्रीधरीटीका एव वर्वर्ति, तदनु लिखिता वंशीधरीटीका तमेव विषयं सविशेषं विशदयति । अस्य दशमस्कन्धान्तर्गते सप्ताशीतितमे वेदस्तुतिनामकेऽध्याये यदनेकविधं व्याख्यानमुपलभ्यते तदपि महन्महत्त्वपूर्णमेव ।

**श्रीधराचार्यस्य परिचयः** – श्रीमद्भागवते भावार्थदीपिकाटीकायाः कर्ता स्वनामधन्यो भक्तिमतां हृदयेषु कृतावासः श्रीमान् श्रीधरःस्वामी देशकालादिभिर्न तथा प्रसिद्धो यादृशी अमुष्यटीका प्रसिद्धेः पराङ्कोटिमाटीकते । अयमदसीयटीकाया एव प्रभावो यदेनं केचन वङ्गप्रदेशीयम्, अपरे उत्कलदेशालङ्करणम् इतरे गुर्जरदेशमौलिमाणिक्यभूतं तदितरे च महाराष्ट्राभिजनमा–

मनन्ति। यदयं महानुभावो वाराणस्यां विन्दुमाधवमन्दिरस्य नातिदूरे वसतिं चकारेति । अमुष्यनाम्नैव श्रीधरमठस्तत्र श्रीमन्नृसिंहस्य मूर्तिरपि विराजते मणिकर्णिकाघट्टपरिसरे, यतो हि श्रीधरस्वामी भगवतो नृसिंहस्य परमोपासकेष्वन्यतमो बभूवेति, अमुष्यटीकायां बहुत्र विषयस्यास्य समर्थकोद्धरणानि समुपलभ्यन्ते, तथाप्येकं भागवतटीकायां प्रस्तुतं मङ्गलाचरणात्मकं पद्यमिहोपन्यस्यते –

**'वागीशा यस्य वदने लक्ष्मीर्यस्य च वक्षसि।**
**यस्यास्ते हृदये संवित् तं नृसिंहमहं भजे'** ॥

अन्येऽपि मन्वते यदनेनेयं टीका भगवतः श्रीनृसिंहस्य प्रसादत एव कृतेति। तत्पद्यं यथा –

**व्यासो वेत्ति शुको वेत्ति राजा वेत्ति न वेत्ति वा।**
**श्रीधरः सकलं वेत्ति श्रीनृसिंहप्रसादतः॥**

श्रीनृसिंहो भगवान् विष्णुस्वरूप एव नात्र कस्यापि धार्मिकस्य विदुषो विमतिः।

श्रीधरस्वामिनो गुरोर्नाम 'परमानन्द' इति, अन्तःसाक्ष्य-बलेन निश्चेतुं शक्यते, यतो हि द्वादशस्कन्धस्य समाप्तौ श्रीधरस्वामी 'परमानन्दपादाब्जभृङ्गश्रीः' इति विशेषणं प्रस्तूय स्वकीयपरिचयं प्रादात् । श्रीमद्भगवद्गीतायाः सुबोधिनीटीकायाः पर्यवसाने च स तमेव विषयमेवमाम्रेडयति –

**'परमानन्दपादाब्जरजः श्रीधारिणाऽधुना।**
**श्रीधरस्वामियतिना कृता गीतासुबोधिनी'** ॥

(गीता अ.१८ अन्तिमपद्यम्)

**अस्य कालः** – श्रीमद्भागवतमहापुराणस्य टीकाकारेषु विश्व-विश्रुतकीर्तेः श्रीधरस्वामिनः कालनिर्णयविषयेऽत्र किमपि विचार्यते । अतोऽत्र केचन प्रमाणबिन्दव इह समुपस्थाप्यन्ते ।

श्रीधरस्वामिना विष्णुपुराणस्य टीकायां सिचत्सुखाचार्यस्य नामोल्लेखनं कृतमस्ति । अत एतत्सम्बन्धिशिलालेखानाधारीकृत्य अयं महापुरुषः १२२०–१२८४ ख्रिष्टीयवर्षेभ्यः परवर्ती सिद्ध्यति तथा श्रीधरस्वामी बोपदेवस्य (१३०० ई.) उल्लेखं कृतवान् । अतो यदमुष्यकालावधिः १३०० खीष्टतः १३५० खीष्टाब्दं यावत् स्वीकरणीय इति ।

उपर्युक्त विभिन्न मितिहरूलाई विचार गर्दा उहाँको समय १४ औँ खीष्टाब्द नै देखिन्छ । अन्ततः उहाँ परमानन्द नामक अद्वैती सन्न्यासीका शिष्य हुनु भएको प्रमाणित हुन्छ । यसैकारण भागवतमा आएको उहाँको भावार्थदीपिकाटीका अद्वैत वेदान्तपरक भएको प्रमाणित हुन्छ ।

स्वामी श्रीश्रीधरको कृतित्व र व्यक्तित्वका बारेमा माथि यथामति सङ्क्षिप्त उल्लेख गरियो । अब उहाँद्वारा लेखिएको श्रीमद्भागवत महापुराणको भावार्थदीपिकाटीका र अवतरणिकाका सम्बन्धमा अत्यन्त छोटो चर्चा गरिने छ । भागवतलाई विभिन्न सम्प्रदायहरूले आ-आफ्ना सम्प्रदाय पन्थका सिद्धान्त र मत अनुसार व्याख्या प्रायः गरेका छन् । किन्तु वैदिक सिद्धान्त अनुसार वेद[1] र उपनिषद्‌ले सारग्रहण गरेर भगवान् वेदव्यासद्वारा प्रणीत यो ग्रन्थ कैवल्य मोक्षको परम साधन हो भनेर भागवतले नै उद्घोष गरेको छ। तर तदनुरूप टीका टिप्पणी, व्याख्या र अर्थ समेत द्योतन कुनैबाट पनि हुन नसकेपछि स्वामीजीले सोही उद्देश्यपूर्ति गर्न यो टीका लेख्नुभएको यथार्थ उहाँले

---

१. सर्ववेदान्तसारं यद् ब्रह्मात्मैकत्वलक्षणम् ।
वस्त्वादितीयं तन्निष्ठं कैवल्यैकप्रयोजनम् ॥
सर्ववेदान्तसारं हि श्रीभागवतमिष्यते ।
तद्रसामृततृप्तस्य नान्यत्र स्याद्रतिः क्वचित् ॥
– श्रीभागवत १२।१३।१२–१५

शुरुमा नै “सम्प्रदायानुरोधेन पौर्वापर्यानुसारतः । श्रीभागवतभावार्थ दीपिकेयम्प्रतन्यते ।” भनेर लेख्नुभएबाट ज्ञात हुन्छ ।

उपर्युक्त प्रतिज्ञावाक्य अनुसार नै स्वामीजीले श्रीभागवतको टीका अद्वैत वेदान्तको सिद्धान्त अनुसार लेख्नुभएको देखिन्छ । किन भने भगवान् वेदव्यासद्वारा रचित अद्वैत वेदान्तको ब्रह्मसूत्रको दोस्रो [२]सूत्र अनुरूप श्रीभागवतको प्रथम [३]श्लोक शुरु भएको देखिन्छ । यस प्रकारको उपक्रमबाट शुरु भएको ग्रन्थको उपसंहार श्रीशुकदेव-स्वामीको [४]उपदेश वाक्यपछि राजा परीक्षित्को [५]‘ब्रह्मानुभूतिपरक’ उक्तिबाट पनि भागवतको प्रयोजन कैवल्य मुक्ति नै भएको प्रष्ट हुन्छ ।

यस प्रकारको वेद र उपनिषद्को सार र मुक्तिको एकमात्र परम साधन भएको भागवत जति अध्ययन गरे पनि पार पाउन सकिँदैन । सामान्य मान्छेको ता कुरै छोडौँ ‘विद्यावतां भागवते परीक्षा’ भनिएको हुँदा यो ग्रन्थ कति दुरूह छ भन्ने स्पष्टै हुन्छ ।

यस्तो दुर्बोध्य श्रीभागवतमा मेरो गति हुने सम्भवै थिएन । यसैका लागि मैले आफूले गुरुमुखी भएर श्रवण गरेका र अध्ययन गरेका श्रीशाङ्करभाष्यसहितका प्रस्थानत्रयी अर्थात् ‘श्रीमद्भगवद्गीता’

---

२. जन्माद्यस्य यतः । – ब्रह्मसूत्र १।२।१।१

३. जन्माद्यस्य यतोऽन्वयादितरतश्चार्थेष्वभिज्ञः स्वराट्
तेने ब्रह्म हृदा य आदिकवये मुह्यन्ति यत्सूरयः ।
तेजो वारिमृदां यथाविनिमयो यत्र त्रिसर्गोमृषा
धाम्ना स्वेन सदा निरस्त पुहकं सत्यं परं धीमहि ॥
– श्रीभागवत १।१।१।

४. अहं ब्रह्म परं धाम ब्रह्माहं परमं पदम् ।
एवं समीक्षन्नात्मानमात्मन्याधाय निष्कले ॥ – श्रीभागवत १२।५।११

५. भगवंस्तक्षकादिभ्यो मृत्युभ्यो न बिभेम्यहम् ।
प्रविष्टो ब्रह्म निर्वाणमभयं दर्शितं त्वया ॥ – श्रीभागवत १२।६।५

(निबन्धका रूपमा) उपनिषद् र ब्रह्मसूत्रको सार र अन्य वेदान्तका महत्त्वपूर्ण ग्रन्थहरू वेदान्तपरिभाषा, वेदान्तसार र अद्वैत सिद्धिका केही परिच्छेद समेतको नेपाली भाषामा अनुवाद गरेर प्रकाशन गर्ने सत्प्रयास गरेको छु । यिनका अतिरिक्त भिगवान् श्रीशङ्कराचार्यद्वारा प्रणीत ब्रह्मसूत्रको उपोद्घात अध्यास भाष्यको गद्यानुवाद, माण्डूक्योपनिषद्को गद्यानुवादका साथै गौडपादाचार्यको माण्डूक्यकारिकाको समछन्दमा गरिएको पद्यानुवाद र भगवान् श्रीशङ्कराचार्यको 'अपरोक्षानुभूति' एवं 'मणिरत्नमाला प्रश्नोत्तरी' को समछन्दमा नेपाली भाषामा गरिएको अनुवाद पनि प्रकाशित भएका छन् ।

उपर्युक्त ग्रन्थहरूका साथसाथै श्रवण, मनन, निदिध्यासन र ब्रह्माभ्यासलाई साधनतया सुदृढ गर्ने उद्देश्यले श्रीभागवतका केही ज्ञान र भक्तिपरक श्लोकहरू अध्यायहरूलाई पनि विभिन्न कालखण्डमा केही समछन्दमा केही विषम छन्दमा, केहीको समछन्दका साथै गद्यमा समेत अर्थ स्पष्ट गर्ने काम भएको छ । तदनुसार ज्ञान र भक्ति, रासपञ्चाध्यायी, श्रीकृष्णाय वयन्नुमः र अन्तिम उपदेश समेत पर्दछन् । श्रीभागवतको अर्थ र तात्पर्य बुझ्ने उत्कट इच्छाले माथि उल्लिखित अनुवादका साथै श्रीभागवतका महत्त्वपूर्ण ज्ञान तथा भक्तिपरक विषयहरूलाई मैले आफ्ना मौलिक निबन्धग्रन्थहरू ब्रह्मसाक्षात्कार, परमसत्य, ब्रह्मविद्या, पराविद्या, औपनिषद पुरुष र प्रकाशोन्मुख 'ऋते ज्ञानान्नमुक्ति' समेत पर्दछन् ।

यसरी अनुपम ग्रन्थ कर्म, भक्ति र ज्ञानको त्रिवेणी भएको श्रीभागवतलाई बुझेर आत्मसात् गर्ने प्रयासमा धेरै दशकदेखि म निरन्तर लागिरहेँ तर पनि मेरो जिज्ञासा शान्त भएन । यसको कारण के हुनसक्तछ त ? भन्ने चिन्तन गर्दा मैले समग्ररूपमा यसलाई नलिएर खण्डखण्डमा बुझ्न खोज्दा यस्तो अपूर्णता ममा रहेको हो भन्ने मलाई

अनुभूति भयो। किन्तु मेरो उमेर, क्षमता, ज्ञानको सीमितता र स्वास्थ्य समेतको कारणले गर्दा मैले मेरो प्रवृत्ति र अरू लेखन गरे जस्तो गरेर समग्र श्रीभागवतको सार लेखेर प्रकाशन गर्नेतर्फ प्रवृत्त हुन सकिन।

यति हुँदाहुँदै पनि भागवतको बारेमा समग्रमा ज्ञान गर्ने मेरो इच्छा यथावत् नै रह्यो । यसै सन्दर्भमा अहिलेभन्दा सात दशक अगाडिको म अबोध बालक हुँदाकै एउटा स्मृति मेरो स्मृतिपटलमा झुल्कियो। मेरा घरमा पिताजी र दाजुसमेत भागवतका ज्ञाता पण्डित हुनुहुन्थ्यो र हुनुहुन्छ। मेरो घरमा प्रायः सप्ताहवाचन र विभिन्न धार्मिक कार्यक्रमहरू भइरहन्थे र पुरुषोत्तम माहात्म्य, कार्तिक माहात्म्य, एकादशी महात्म्य, वैशाख माहात्म्यका साथै अन्य माहात्म्यहरू बारम्बार सुन्ने सुनाउने परम्परा थियो। मेरो गाउँ ब्राह्मणहरूको वस्ती भएको हुनाले गाउँमा पनि धेरैजसो घरमा पढेलेखेका पण्डितहरू नै हुन्थे र गाउँमा पनि भागवत श्रवण, हरिकीर्तन र अरू धार्मिक उत्सवहरू भइरहन्थे। यसै अन्तरालमा मेरो घरको छिमेकी एकजना भारततर्फ गएर संस्कृत पढेर घर आएका थिए। त्यस बेलाको सामाजिक तथा धार्मिक वातावरणअनुसार संस्कृत पढेका छोरा, नातिहरूले घरमा मातापितालाई श्रीभागवत श्रवण गराउनुपर्ने चलन थियो। तदनुरूप तिनले पनि घरमा सप्ताह लगाउने भए। तर उनमा सायद भागवतको अभ्यास नभएर होला मेरो घरमा पिताजी र दाजुसँग भागवत पढ्न आएका थिए। त्यस वेलाको कुरा जहाँसम्म मलाई सम्झना छ अरू कुराको अतिरिक्त उनलाई श्रीश्रीधरस्वामीले लेख्नुभएको श्रीभागवतको यही अवतरणिका पढाइएको थियो। म सानै भए पनि नजिकै बसेर सबै सुनिरहन्थेँ तर केही बुझ्दिनथेँ। त्यो कुरा मेरो अन्तःकरणमा सुषुप्त स्मृतिका रूपमा सुरक्षितै रहेछ, त्यसैकारण अहिले म किंकर्तव्यविमूढ भएको वेला मेरो अन्तरआत्माले त्यसै अवतरणिकालाई समछन्दमा नेपालीमा अनुवाद

गरेर आफ्नो जिज्ञासा शान्त गर्न प्रेरित गर्‍यो। तदनुरूप नै यस ग्रन्थको लेखन मैले गरेको हुँ । म जस्तो अबोध व्यक्तिले श्रीभागवतलाई समग्ररूपमा बुझ्न संस्कृत साहित्यका महाकवि [६]कालिदासले आफ्नो महाकाव्य रघुवंशमा भनेजस्तै मेरो यो दुष्प्रयास मात्र हुनेछ भन्ने मैले ठानेको छु। जेसुकै भए पनि मैले भगवान्मा पत्रंपुष्पंको रूपमा यसलाई समर्पण गर्नका लागि नै पवित्र प्रयास गरेको हुँ र यो भगवान्मा नै म समर्पण गर्दछु।

श्रीश्रीधर स्वामीले श्रीभागवतको विस्तृत भावार्थदीपिकाटीकाका साथसाथै त्यसको सङ्क्षिप्त सारका रूपमा यस अवतरणिकाको रचना गर्नुभएको देखिन्छ। त्यसैको समछन्दमा अनुवाद गरिएको हुँदा सारांशतः यस ग्रन्थको नाम पनि श्रीमद्भागवतसार नै राख्नु उपयुक्त हुने देखी सोही गरिएको छ।

अन्त्यमा अद्वैत वेदान्तका वरिष्ठ विद्वान्, श्रीमद्भागवतमहापुराणका ज्ञाता तथा वक्ता प्राध्यापक भवानीप्रसाद खतिवडाज्यूले यस पाण्डुलिपिलाई आद्योपान्त पढेर सारगर्भित तथा विद्वतापूर्ण मन्तव्य लेखिदिनुभएकोमा उहाँप्रति हार्दिक कृतज्ञता ज्ञापन गर्दछु । यस ग्रन्थलाई कुशलतापूर्वक प्रतिलिपी तयार गरेर प्रकाशनयोग्य बनाइदिनुहुने श्रीखड्गप्रसाद खनालज्यूलाई पनि हार्दिक धन्यवाद दिन्छु। अस्तु। हरि ॐ तत्सत्। ॐ ब्रह्मार्पणमस्तु।

वसन्तपञ्चमी<br>२०७४।१०।८

विनीत<br>शरत्कुमार भट्टराई



---

६. क्व सूर्यप्रभवो वंशः क्व चाल्प विषया मतिः ।<br>तितीर्षु दुष्तरं मोहादुडुपेनास्मि सागरम् ॥<br>– रघुवंशमहाकाव्यम् १।२



श्रीभागवतभावार्थदीपिकाका टीका र
अवतरणिकाका रचयिता श्रीश्रीधर स्वामी

# विषयसूची

# पहिलो स्कन्ध

## श्रीगणेशाय नमः

## श्रीगोपाल कृष्णाय नमः

### मङ्गलाचरणम्

ॐ नमः परमहंसास्वादितचरणकमलचिन्मकरन्दाय
भक्तजनमानसनिवासाय श्रीरामचन्द्राय ॥

वागीशा यस्य वदने लक्ष्मीर्यस्य च वक्षसि ।
यस्याऽऽस्ते हृदये संवित् तं नृसिंहमहं भजे ॥

विश्वसर्गविसर्गादिनवलक्षणलक्षितम् ।
श्रीकृष्णाख्यं परं धाम जगद्धाम नमाम तत् ॥

माधवोमाधवावीशौ सर्वसिद्धिविधायिनौ ।
वन्दे परस्परात्मानौ परस्परनुतिप्रियौ ॥

सम्प्रदायानुरोधेन पौर्वापर्यानुसारतः।
श्रीभागवतभावार्थदीपिकेयं प्रतन्यते ॥

क्वाहं मन्दमतिःक्वेदं मन्थनं क्षीरवारिधेः ।
किं तत्र परमाणुर्वै यत्र मज्जति मन्दरः॥

मूकं करोति वाचालं पङ्गुं लङ्घयते गिरिम् ।
यत्कृपा तमहं वन्दे परमानन्दमाधवम् ॥

श्रीमद्भागवताभिधः सुरतरुस्ताराङ्कुरः सज्जनिः ।
स्कन्धैर्द्वादशभिस्ततः प्रविलसद्भक्त्यालवालोदयः ॥

द्वात्रिंशत्त्रिशतञ्च यस्य विलसच्छाखाः सहस्राण्यलं ।
पर्णान्यष्टदशेष्टदोऽतिसुलभो वर्वीर्ति सर्वोपरि ॥

व्यासो वेत्ति शुको वेत्ति राजा वेत्ति न वेत्ति वा ।
श्रीधरः सकलं वेत्ति श्रीनृसिंहप्रसादतः ॥

मूढोऽहं अति मन्दोऽहं तथापि चित्तशुद्धये ।
अनुवादमहं कुर्वे श्रीधरस्यानुसारतः ॥

तदेवं प्रथमे ऽ ध्याये षट् प्रश्ना मुनिभिः कृताः ।
द्वितीये तूत्तरं सूतश्चतुर्णामाह तेष्वथ ॥

पैलोमा मुनिले प्रश्न ६ ओटा गर्दछन् अनि ।
दोस्रोमा प्रश्न चाडाका सूतले भन्दछन् पनि ॥
(१, २)

अवतारकथाप्रश्ने तृतीये तूत्तराभिधा ।
पुरूषाद्यवतारोक्त्या तत्तच्चारित्रवर्णनैः ॥

अवतारकथा प्रश्न तेस्रोमा हुन्छ उत्तर ।
चरित्र ईशको सारा कथा सङ्क्षिप्त सुन्दर ॥
(३)

तुर्ये भागतारम्भकारणत्वेन वर्ण्यते ।
व्यासस्यापरितोषस्तु तपः प्रवचनादिभिः ॥

ग्रन्थ आरम्भको हेतु चारौँमा हुन्छ वर्णन ।
व्यासको मनको चिन्ता तपसादिक कीर्तन ॥
(४)

पञ्चमे सर्वधर्मेभ्यो हरिकीर्तनगौरवम् ।
व्यासचित्तप्रसादाय नारदेनोपदिश्यते ॥

व्यासन्तुष्टिका लागि श्रेष्ठ हो हरिकीर्तन ।
भनी नारदले गर्छन् पाचौँमा भक्तिवर्णन ॥
(५)

व्यासस्य प्रत्ययार्थञ्च षष्ठे प्राग्जन्मसम्भवम् ।
स्वभाग्यं नारदः प्राह कृष्णसङ्कथनोद्भवम् ॥

प्राग्जन्मको कथा आफ्नै सम्झी नारदले सब ।
महत्त्व कृष्ण सेवाको छैटौँमा भन्दछन् तब ॥
(६)

अथ भागवतश्रोतुर्जन्म वक्तुं परीक्षितः ।
सुप्तबालवधाद्द्रौणेर्दण्डः सप्तम उच्यते ॥

अनि भागवतश्रोता जन्माउन परीक्षित ।
द्रौणिको बालहत्यादि सातौँमा छ क्रमैसित ॥
(७)

अष्टमे कुपितद्रौणेरस्त्राद्रक्षा परीक्षितः ।
श्रीकृष्णेन स्तुतिः कुन्त्या राज्ञःशोकश्च कीर्त्यते ॥

द्रौण्यास्त्रबाट आठौँमा गरेर शिशुरक्षण ।
भगवान् कृष्णले कुन्ती राजामा दिनुभो मन ॥
(८)

युधिष्ठिराय भीष्मेण सर्वधर्मनिरूपणम् ।
कृष्णस्तुतिश्च मुक्तिश्च नवमे तस्य वर्ण्यते ॥

नवौँमा भीष्मले राजालाई ज्ञान दिए सब ।
श्रीकृष्णको स्तुति गर्दै भए मुक्त उनी तब ॥
(९)

दशमे कृतकार्यस्य हस्तिनापुरतो हरेः ।
स्त्रिभिः संस्तूयमानस्य वर्ण्यते द्वारकागमः ॥

दशौँमा भगवान् कृष्ण काम सारा सकीकन ।
सबैको मान पाएर हिड्नुभो द्वारकाकन ॥
(१०)

आनर्तैः स्तूयमानस्य पुरीं निर्दिश्य बन्धुभिः।
एकादशे रतिः सम्यग्यादवेन्द्रस्य वर्ण्यते ॥

एघारौँमा अति स्निग्ध प्रेमासिक्त सधैँभरि ।
पुजिँदै बन्धुले आफ्ना द्वारका पुग्नु भो हरि ॥
(११)

पुरोक्तं यत्प्रसङ्गाय द्रौणिदण्डादि विस्तरात् ।
द्वादशे तु तदेवाय परीक्षिज्जन्म वर्ण्यते ॥

परीक्षितोऽथ राजर्षेर्जन्मकर्मविलायनम् ।
संस्थाञ्च पाण्डुपुत्राणां वक्ष्ये कृष्णकथोदयम् ॥

बारौँमा जन्मकर्मादि परीक्षित्को भनी अरू ।
पाण्डुपुत्रादिको राज्य कृष्णप्रसङ्ग भो शुरु ॥

(१२)

निर्गमो धृतराष्ट्रस्य विदुरोक्त्या त्रयोदशे ।
उक्तः पौत्राभिषेकेण वक्तुं राज्ञो महापथम् ॥

धृतराष्ट्र हिँडे रातै भाइका साथ उत्तर ।
सुम्पेथे पौत्रमा राज्य भनिन्छ तेह्रमा तर ॥
(१३)

चतुर्दशे त्वरिष्टानि दृष्ट्वा राजा विशङ्कितः ।
अशृणोदर्जुनात्कृष्णतिरोधानमितीर्यते ॥

चौधमा देखिँदा धेरै अरिष्ट धर्मशङ्कित
भने अर्जुनले कृष्ण स्वधामगमनादिक ॥
(१४)

कलि प्रवेशमालक्ष्य धुरं न्यस्य परीक्षिति ।
आरूरोह नृपः स्वर्गमिति पञ्चदशेऽब्रवीत् ॥

पन्ध्रौँमा कलि आएको जानेर पौत्रमा सब ।
राज्य सुम्पी गए राजा महाप्रस्थानमा तब ॥
(१५)

ततश्च षोडशे भूमिर्धर्मयोः कलिखिन्नयोः ।
संवादे वर्ण्यते प्राप्तिः पालकस्य परीक्षितः ॥

सोह्रौँमा धर्मपृथ्वीको सुनी संवाद नै सब ।
कलिप्रवेशको चिह्न देख्नु भो नृपले तब ॥
(१६)

ततः सप्तदशे राज्ञः कलेर्निग्रह उच्यते ।
तस्यैवं वीर्यभाजोऽपि वैराग्यं वक्तुमद्भुतम् ॥

सत्रौँमा कलि रोकेर राष्ट्रको भो समुन्नति ।
किन्तु वैराग्य मुक्तिको भयो हेतु स्वसद्गति ॥
(१७)

राज्ञस्त्वष्टादशे तस्य ब्रह्मशापो निरूप्यते ।
स चानुग्रह एवास्य जातो वैराग्यमावहन् ॥

अठारौँमा भयो शाप ठानी प्रसाद सत्वर ।
भई विरक्त ती राजा हिँडे गङ्गा भए तिर ॥
(१८)

प्रायोप्रविष्टे गङ्गायां राज्ञि योगिजनावृते ।
शुकस्यागमनं तत्र प्रोक्तमेकोनविंशके ॥

प्रायोप्रविष्ट ती राजा गङ्गा किनारमा गए ।
अन्त्यमा शुकजी आए राजा मुक्त हुने भए ॥
(१९)

श्रीमद्भागवतमहापुराणको पहिलो स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।

हरि ॐ तत्सत्

श्रीकृष्णार्पणमस्तु



# दोस्रो स्कन्ध

## श्रीगणेशाय नमः

द्वितीये तु दशाध्यायैः श्रीभागवतमादित ।
उद्देशलक्षणोक्तिभ्यां सङ्क्षेपेणोपवर्ण्यते ॥

तत्र तु प्रथमेऽध्याये कीर्तनश्रवणादिभिः ।
स्थविष्टे भगवद्‌रूपे मनसो धारणो यते ॥

यन्नामकीर्तनं दानतपोयोगादिसत्फलम् ।
तं नित्यं परमानन्दं हरिं नर नमःस्मर ॥

उक्तः पूर्वमुपोद्‌घातः सप्रसङ्ग्ः शुकागमः ।
राज्ञा पृष्टं नृणां कृत्यमथाह शुकसन्मुनिः ॥

उक्तः पूर्वमुपोद्‌घातः सप्रसङ्गः शुकागमः ।
राजा पृष्ठं नृणां कृत्यमथाह शुकसन्मुनिः ॥

प्रथमस्कन्धमा व्यक्त शुकको भो शुभागम ।
शुरुभो दिव्य संवाद राजाका साथ यो क्रम ॥

पैलोमा नृपको प्रश्न कृत्यको शुकले पनि
भगवान्‌को विराट्‌रूप भन्न लागे सबै अनि ॥
(१)

द्वितीये तु ततः स्थूलधारणातो जितं मनः ।
सर्व साक्षिणि सर्वेशे विष्णौ धार्यमितीर्यते ॥

दोस्रोमा स्थूलका द्वारा जितेर चञ्चले मन ।
धारणा भगवद्‌रूप गर्ने भित्र लगीकन ॥
(२)

तृतीये विष्णुभक्तेस्तु वैशिष्ट्यं शृण्वतो मुनेः ।
भक्त्युद्रेकेण तत्कर्मश्रवणादर ईर्यते ॥

तेस्रोमा भक्तवैशिष्ट्य मुनिबाट सुनीकन ।
भक्ति उद्रेकले गर्दा बढ्यो आदर तत्क्षण ॥
(३)
तुर्ये परीक्षिता पृष्टं सृष्ट्यादि हरिचेष्टितम् ।
शुकेन ब्रह्मतत्पुत्रसंवादेनोपवर्ण्यते ॥

चारौँमा नृपले सोधे सृष्ट्यादि हरिचेष्टित ।
ब्रह्मानारदसंवादद्वारा भो शुकवर्णित ॥
(४)
पञ्चमे नारदेनाथ पृष्ट सृष्ट्यादि वक्त्यजः ।
हरेर्लीला विराट्सृष्टिं कालकर्मादिशक्तिभिः ॥

पाँचौँमा सृष्टिको प्रश्न गरे नारदले जब ।
ब्रह्माले हरिलीला र विराट्सृष्टि भने सब ॥
(५)
षष्टे विराड्विभूतिश्च प्रोक्ताऽध्यात्मादिभेदतः ।
दृढाकृतञ्च पूर्वोक्तं सर्वं पुरुषसूक्ततः ॥

अध्यात्मभेदका साथै विराट्शक्ति यथार्थतः ।
षष्टौँमा अजले सारा भने पुरुषसूक्तितः ॥
(६)
सप्तमे भगवल्लीलाऽवतारा ब्रह्मणोदिताः ।
नारदाय तु तत्कर्म प्रयोजनगुणैः सह ॥

सातौँमा भगवल्लीलाऽवतार अजले भने ।
कर्म प्रयोजन नै साथ गुण नारदले सुने ॥
(७)

अष्टमे देहसम्बन्धमाक्षिपन्नीशजीवयोः ।
बहून्परीक्षिदापृच्छत्पुराणार्थान्बुभुत्सितान् ॥

आठौँमा देहसम्बन्ध भिन्नता ईशजीवको ।
गरेथे नृपले प्रश्न अर्थ बुझ्न पुराणको ॥
(८)

राजप्रश्नोत्तरं बक्ष्यन्ब्रह्मणे हरिणोदितम् ।
कथयामास नवमे शुको भागवतं पुनः ॥

दिँदै उत्तर राजामा विष्णूक्त अजमा सब ।
बताए शुकले नौमा तत्त्व भागवती तब ॥
(९)

ततो भागवतव्याख्याद्वारैव दशमे स्फुटम् ।
राजप्रश्नोत्तरं वक्तुमारेभे बादरायणिः ॥

आयो भागवती व्याख्या दशौँमा दशलक्षणी ।
राजप्रश्नोत्तरै भन्न थालेथे बादरायणी ॥
(१०)

श्रीमद्भागवतमहापुराणको दोस्रो स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।

हरि ॐ तत्सत्
श्रीकृष्णार्पणमस्तु



# तेस्रो स्कन्ध

**श्रीगणेशाय नमः**

**श्रीगोपाल कृष्णाय नमः**

तृतीये तु त्रयस्त्रिंशदध्यायैः सर्गवर्णनम् ।
ईशेक्षया गुणक्षोभात्सर्गो ब्रह्माण्डसम्भवः ॥

भगवद्ब्रह्मसम्प्रोक्तं सङ्क्षिप्तं वर्णितं पुरा ।
प्राह भागवतं शेषप्रोक्तं विस्तरतः पुनः ॥

तत्रतु प्रथमेऽध्याये बन्धून्हित्वा गतायुषः ।
निर्गतस्योद्धवेनादौ संवादः क्षत्तुरुच्यते ॥

मुमुर्षु बन्धु छोडेर हिँडे विदुर बाहिर ।
पैले उद्धवका साथ भयो संवाद सुन्दर ॥

(१)

द्वितीये कृष्णविश्लेषादनुशोचन्नथोद्धवः ।
क्षत्त्रे बालचरित्राणि कृष्णस्यावर्णयच्छ्वसन् ॥

दोस्रोमा कृष्ण जानाले अति सन्तप्त उद्धव ।
क्षत्तालाई भने बालकृष्ण चरित्र ती सब ॥

(२)

तृतीये मथुरामेत्य व्रजात्कंसवधादिकम् ।
यत्कृतं द्वारकायाञ्च कृष्णेन तदवर्णयत् ॥

तेस्रोमा मथुरामा गै गरेर कंसको वध ।
कृष्णको द्वारकामा त्यो बसेको भो कथा सब ॥

(३)

चतुर्थे बन्धुनिधनं श्रुत्वात्मज्ञानलब्धये ।
उद्धवस्योपदेशेन क्षत्ता मैत्रेयमागमत् ॥

बन्धुको क्षय क्षत्ताले सुनी विरक्त नै भए ।
पाई उद्धवको अर्ती मैत्रेय भेट्न ती गए ॥
(४)

पञ्चमे भगवल्लीलां क्षत्त्रा पृष्टो महामुनि ।
प्रोवाच महदादीनां सर्गं तैश्च हरेः स्तुतिम् ॥

पाचौँमा भगवल्लीला क्षत्ता सोध्छन् शुकैसँग ।
बताए क्रमले सर्ग हरिस्तुति क्रमैसँग ॥
(५)

षष्टे तैरीश्वराविष्टेः सृष्टिमाह विराट्तनोः ।
अधिदैवादिभेदञ्च तत्रैव भगवत्कृतम् ॥

छैटौँमा ईश्वरापन्न भने सृष्टि विराट्तनु ।
अधिदैवादिकाभेद त्यहीं नै भगवद् अनु ॥
(६)

सप्तमे संशयच्छेदि प्रतिनन्द्य मुनेर्वचः ।
पुनःक्षत्त्रा कृता नाना प्रश्ना सम्यगुदीरिताः ॥

सातौँमा संशयच्छेदि सुनेर मुनि उत्तर ।
सोधे विदुरले फेरि धेरै नै प्रश्न सुन्दर ॥
(७)

अष्टमे समभूद्ब्रह्मा नाभेस्तु जलशायिनः ।
तमजानञ्जले बिभ्यत्तपसाऽतोषयद्विभुम् ॥

आठौँमा जन्मिए ब्रह्मा नाइटोबाट विष्णुको ।
ब्रह्माले पार्न सन्तुष्ट गरेथे तप विष्णुको ॥
(८)

नवमे तपसा तुष्टं दृष्ट्वा नारायणं त्वजः ।
अस्तौदेकार्णवे सीदँल्लोकसर्गचिकीर्षया ॥

नवौँमा तपले तुष्ट देखेर भगवान् हरि ।
पानीमा सृष्टिका निम्ति अजले गर्नुभो स्तुति ॥
(९)

दशमे कालसंप्रश्नप्राप्तिं वक्तुं तदुद्भवः ।
प्राकृतादिविभागेन सर्गस्तु दशधोच्यते ॥

दशौँमा कालको चाल बुझेर दूर भै भ्रम ।
प्राकृतादि गरे सृष्टि ब्रह्माले दशधाक्रम ॥
(१०)

तत एकादशे कालः परमाण्वादिलक्षणेः ।
युगमन्वान्तरादिभ्यः कल्पमानादि वर्ण्यते ॥

कालको परमाण्वादि युगमन्वादि लक्षण ।
क्रमले सब कल्पादि एघारौँमा छ वर्णन ॥
(११)

द्वादशे तु कुमारादिमनःसर्गाऽसमेधनात् ।
कायद्वैधेन यौनस्तु मनुसर्गोऽनुवर्ण्यते ॥

बाह्रौँमा मनुको सृष्टि कुमारादिहरू गरे ।
ब्रह्माले देह फेरेर मानवी सृष्टि जो गरे ॥
(१२)

त्रयोदशे सिसृक्षायां मनोराकस्मिकाप्लुतम् ।
धरामुद्धर्तुमुद्भूतात्क्रौडाद्दैत्यानुसूदनम् ॥

तेह्रौँमा सृष्टिका लागि वाराहरूप लीकन ।
पृथ्वीउद्धारका साथै गर्नुभो दैत्यसूदन ॥
(१३)

चतुर्दशे निदानन्तु तद्वधे वक्तुमुच्यते ।
सन्ध्यायां कश्यपाद्गर्भसम्भवः कमतो दिते ॥

चौधौँमा दैत्यको जन्म त्यस्को कारण नै पनि ।
दितीमा गर्भसन्धान गरे कश्यपले अनि ॥
(१४)

हतप्रभैः सुरैः पृष्ट प्राह पञ्चदशे विधिः ।
तद्बीजं विप्रशापादि वैकुण्ठे विष्णु भृत्ययो ॥

हारेका सुरले सोधे पन्ध्रौँमा अजमा सब ।
वैकुण्ठे विप्रशापादि श्रीभृत्यमा पऱ्यो तब ॥
(१५)

हरिणा सान्तित्वैर्विप्रैरनुतप्तैस्तु षोडशे ।
तयोरसुरभावेऽपि कृतोऽनुग्रह ईर्यते ॥

सोह्रौँमा भगवान्बाटै विप्रको शाप शान्त भो ।
भृत्य दैत्य हुने नै हुन् तथापि वरदान भो ॥
(१६)

ततः सप्त्दशे जन्म तयोर्लोकभयङ्करम् ।
हिरण्याक्षप्रभावश्च वर्ण्यते दिग्जयेऽद्भुतः ॥

सत्रौँमा जन्मिए दैत्य सर्वलोक भयङ्कर ।
हिरण्याक्ष थियो वीर भयो दिग्विजयङ्कर ।।
(१७)
अष्टादशे हिरण्याक्ष धरोद्धर्तृवराहयोः ।
निर्विशेषं महायुद्धं देवक्षोभि निरूप्यते ।।

अठारौँमा हिरण्याक्ष धरोद्धर्तृ वराहको ।
भयो तुमुल सङ्ग्राम देवत्रासद खालको ।।
(१८)
उनविंशे विरिञ्च्यादि प्रार्थितेन महाभृधे ।
वराहेण हिरण्याक्षवधः श्लाघ्योऽनुवर्ण्यते ।।

उन्नीशमा विरिञ्च्यादिद्वारा जो प्रार्थना भयो ।
अनि वराहद्वारा नै त्यो हिरण्याक्ष मारियो ।।
(१९)
विंशो वराहजन्मादिव्यवधानादथादितः ।
सर्गोऽनुस्मार्यते वक्तुमन्वयं प्रस्तुतं मनोः ।।

विशौँमा कोलको लीला पश्चात् सर्ग बताउँदै ।
ब्रह्मा र मनुको सृष्टि क्रमैसँग सुनाउँदै ।।
(२०)
एकविंशे तपोविद्यातोषितेन तु विष्णुना ।
कर्दमस्य मनोः पुत्र्या विवाहघटनोच्यते ।।

एकीशमा तपोविद्याबाट विष्णु खुशी भए ।
कर्दमै मनुपुत्रीका विवाहादि सबै भए ।।
(२१)

द्वाविंशे कर्दमायादाद्यथादिष्टं हि विष्णुना ।
मनुर्दुहितरं देवहूतिमित्युपवर्ण्यते ॥

विष्णु प्रेरित भै छोरी मनुले ऋषिमा दिए ।
आदि बाइसमा आयो ज्वाईं कर्दमजी थिए ॥
(२२)

त्रयोविंशे ततो योगनिर्मिते सर्वसम्पदि ।
विमाने कामगे चित्रा तयोरतिरुदिर्यते ॥

तेइसौँमा सबैसम्पद् विमानमा चढीकन ।
घुमे कर्दम पत्नीका साथ सर्वत्र दी मन ॥
(२३)

चतुर्विंशे ततो जन्म कपिलस्याह तत्पितुः।
प्रवज्या तमनुज्ञाप्य ऋृणत्रय विमोक्षतः ॥

भयो कपिलको जन्म चौबिसौँमा मिली क्रम ।
घर छोडी हिँडे तिर्न तीनोटा ऋण कर्दम ॥
(२४)

पञ्चविंशे जनन्या तु पृष्टो बन्धविमोचनम् ।
आदावाह परं भक्ति लक्षणं कपिल सुतः ॥

आमाले मुक्तिका लागि सोधिन् पच्चिसमा अनि ।
भने कपिल छोराले भक्तिको लक्षणै पनि ॥
(२५)

षड्विंशे पुंप्रकृत्योस्तु विवेकायोपवर्ण्यते ।
साङ्ख्येन सर्वभावानां जन्मलक्षणभेदतः ॥

छब्बिसौँमा गरे व्याख्या पुं र प्रकृति तत्त्वतः ।
साङ्ख्यानुसार सम्पूर्ण जन्म लक्षण भेदतः ॥
(२६)

सप्तविंशे ततः सम्यग्बहुसाधनयोगतः ।
पुंप्रकृत्योर्विवेकेन मोक्षरीतिर्निरूप्यते ॥

गरे प्रकृति पुंभेद धेरै साधन ती लिई ।
मोक्षको द्वार उघ्रन्छ भन्छ सत्ताइसै गई ॥
(२७)

अष्टाविंशे ततोऽष्टाङ्गयोगेन ध्यानशोभिना ।
सर्वोपाधिविनिर्मुक्तं स्वरूपज्ञानमीर्यते ॥

अठ्ठाइसौँविषे गर्दा अष्टाङ्गयोगले युत ।
भगवद्ध्यानले हुन्छ स्वरूपज्ञान तत्त्वतः ॥
(२८)

एकोनत्रिंशके भक्तियोगस्तु बहुधोच्यते ।
कालस्य च बलं घोरा संसृतिश्च विरक्तये ॥

एकतीशविषे भक्ति धेरैथरी बताइए ।
घोर काल तथा जन्म विरक्ति निम्ति गाइए ॥
(२९)

त्रिंशे तु कायकान्तादिलालनाकुलचेतसाम् ।
कामिनां तामसी पापादधोगतिरुदीर्यते ॥

तिशौँमा कायकान्तादिलालनाकुल चित्त नै ।
कामीको तामसी पापद्वारा पतन हुन्छ नै ॥
(३०)

एकत्रिंशे विमिश्रैस्तु पुण्यपापैरिहान्तरा ।
मनुष्ययोनिसम्प्राप्तिर्वर्ण्यते राजसी गतिः ॥

एकतीस बिषे जीव पुण्यपाप बराबर ।
भए नृयोनिमा पुग्छ राजसी गुण भै तर ॥
(३१)

द्वात्रिंशे सात्त्विकैधर्मैरूर्ध्वं गतिरुदीर्यते ।
तत्त्वज्ञानविहीनस्य ततश्च पुनरागतिः ॥

गुणसात्त्विकले जीव माथि जान्छ भनीकन ।
भन्छ बत्तीसले अज्ञ फर्कन्छ फेरि जन्मन ॥
(३२)

त्रयत्रिंशे तु तस्यैव कपिलस्योपदेशतः ।
ज्ञानभावेन तन्मातुर्जीवन्मुक्तिरुदीर्यते ॥

छोरा कपिलद्वारा नै ज्ञान पाएर अन्तमा ।
देवहूति भइन् मुक्त भनियो त्रयत्रिंशमा ॥
(३३)

श्रीमद्भागवतमहापुराणको तेस्रो स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।

हरि ॐ तत्सत्

श्रीकृष्णार्पणमस्तु



# चौथो स्कन्ध

श्रीगणेशाय नमः

नमः श्रीपरमहंसास्वादितचरणकमलचिन्मकरन्दाय ।
भक्तजनमानसनिवासाय श्रीरामचन्द्राय ॥

अथैकत्रिंशताऽध्यायैर्विसर्गस्तुर्य ईर्यते ।
विसर्गस्त्वीश्वराधीनै ब्रह्ममन्वादिभिः कृतः ॥

तत्र तु प्रथमेऽध्याये मनुकन्यान्वयाः पृथक् ।
वर्ण्यन्ते यत्र यज्ञादिमूर्तिभिः प्रभवो हरे ः ॥

प्रथमाध्यायमा वंश मनुकन्यादिको सब ।
बताइन्छ जहाँ श्रीका यज्ञादि मूर्ति उद्भव ॥

(१)

द्वितीये प्रथमाध्यायोपक्षिप्ते भवदक्षयो ।
विद्वेषे वर्ण्यते हेतुर्विश्वसृड्यज्ञसम्भवः ॥

दोस्रोमा पहिले व्यक्त विद्वेष शिवदक्षको ।
भनिन्छ जसले गर्दा जन्म भो दक्षयज्ञको ॥

(२)

तृतीये तु सती तातयज्ञोत्सवदिदृक्षया ।
गमिष्यन्ति महेशेन वारिता नीतिहेतुभिः ॥

पिताको यज्ञमा जान सती ती जब तंसिइन् ।
रोक्नु भो शिवले जान तेस्नोमा तर ती गइन् ॥
(३)
चतुर्थे तु पतिं हित्वा गता पित्रावमानिता ।
रुषा निर्भत्स्र्य तं यज्ञे जही देहमितीर्यते ॥

चारौँमा पति छोडेर सती माइत जो गइन् ।
पिताले गरिँदा हेँला रिसाएर मरी गइन् ॥
(४)
पञ्चमे तु सतीदेहत्यागमाकर्ण्य शङ्करः ।
वीरभद्रं रुषोत्पाद्य तेन दक्षमघातयत् ॥

सतीले देह त्यागेको पाचौँमा सुनी शङ्कर ।
वीरभद्र गरे सृष्टि दक्ष नास्न भयङ्कर ॥
(५)
षष्ठे तु देवसङ्घेन सह गत्वा भवं विधिः ।
सान्त्वयामास दक्षादि जीविताद्यर्थमादरात् ॥

छैटौँमा देवता साथ ब्रह्मा कैलासमा गए ।
दक्षादि बाच्नका लागि शिवमा विनती गरे ॥
(६)
सप्तमे विष्णुरुद्भूतःस्तुतो दक्षभवादिभिः ।
यज्ञं प्रवर्तयामास दक्षेणेति निरूप्यते ॥

सातौँमा विष्णुजी आए दक्षादिले गरे स्तुति ।
दक्षको यज्ञ भो पूर्ण आदि भो सब संस्तुति ॥
(७)
अष्टमे गुरुदारोक्तिरोषमत्सरतः पुरात् ।
निर्गतेन ध्रुवेणाह तपसा हरितोषणात् ॥

आठौँमा ती विमातोको सुनी वाक्वाण दुच्छर ।
हिँडे ध्रुव खुशी पार्न भगवान् वनका तिर ॥
(८)
नवमे तु हरिं स्तुत्वा लब्ध्वा तस्माद्वरान्ध्रुवः ।
प्रत्यागत्याकरोद्राज्यं पित्रा दत्तमितीर्यते ॥

नवमौँमा स्तुतिद्वारा भगवान्बाट ली वर ।
फर्किए ध्रुव राजाले सुम्पिए राज्य सत्त्वर ॥
(९)
दशमे भातृहन्तॄणां यक्षणामकरोद्वधम् ।
एक एवालकां गत्येत्यस्य विक्रम उच्यते ॥

अलकामा पुगी एक्लै हत्यारा भाइका तब ।
यक्षादिको गरे हत्या ध्रुवले भनियो सब ॥
(१०)
एकादशे तु यक्षाणां क्षयं दृष्ट्वा मनुः स्वयम् ।
आगत्य वारयामास ध्रुवं तत्त्वोपदेशतः ॥

देखी यक्षादिको नाश एघारमा मनु स्वयम् ।
आएर रोक्नु भो तत्त्व बताई ध्रुवमा स्वयम् ॥

(११)

द्वादशे धनदेनाभिनन्दितः पुरमागतः ।
यज्ञैरिष्ट्वा हरेः स्थानमारुरोहेति कीर्त्यते ॥

बाह्रौँमा यक्षराड्द्वारा अभिनन्दित भै ध्रुव ।
फर्किए हरिको यज्ञ गरे चढे उँभो भए ध्रुव ॥

(१२)

तत्र त्रयोदशे वक्तुं पृथोर्वंशे ध्रुवान्वये ।
अङ्गो वेनपितापुत्रक्रौर्याद्गत इतीर्यते ॥

तेह्रौँमा ध्रुववंशीय पृथुचरित्र नै पनि ।
आयो अङ्ग भए लुप्त पुत्रका पीरले अनि ॥

(१३)

चतुर्दशे तु दुष्पुत्रभयादङ्गे गते द्विजैः ।
अभिषिक्तस्य वेनस्य रोषार्तै वध उच्यते ॥

चौधौँमा दुष्ट छोराको डरले अङ्ग अल्पिए ।
दुष्ट वेन भए राजा द्विजद्वारा डढे गए ॥

(१४)

ततः पञ्चदशे विप्रैर्मथनाद्वेनबाहुतः ।
जातस्य तु पृथोरुक्तमभिषेकार्हणादिकम् ॥

पन्धौँमा विप्रले फेरि मथेर बाहु वेनको ।
जन्मिए पृथु राजर्षि कथा राज्याभिषेकको ॥
(१५)

षोडशे सर्वलोकेशैः सत्कृतं भार्यया युतम् ।
मुनिप्रयुक्ताः सूताद्याः स्तुवन्ति स्मेति वर्ण्यते ॥

सोह्रौँमा सर्वलोकेशद्वारा सत्कृत ती नृप ।
मुनिप्रयुक्त वन्दीले गरे स्तुति खुली खुप ॥
(१६)

ततः सप्तदशे लोकक्षुधाः प्रशमयन्पृथुः ।
ग्रस्तबीजां महीं हन्तुं यत्तो भीत्या तथा स्तुतः ॥

सत्रौँमा जनको भोक नाश गर्न महीपति ।
बीज खाने महीलाई मार्न खोज्दा गरिन् स्तुति ॥
(१७)

अष्टादशे महीवाक्याद्वत्सपात्रादि भेदतः ।
पृथ्वादिभिस्तु सा दुग्धा स्वं स्वं दुग्धमितीर्यते ॥

अठारौँमा महीबाट बाछो भाँडो विभिन्न ली ।
पृथ्वादिले दुहे दूध आफ्नै लागि सबै मिली ॥
(१८)

उनविंशोऽश्वमेधाङ्गहयापहरणात्पृथोः ।
इन्द्रं हन्तुं प्रवृत्तस्य धात्रावारणमुच्यते ॥

अश्वमेधाङ्ग घोडा नै पृथुको इन्द्रले हरे ।
इन्द्र मार्न भयो यत्न उन्नीशमा क्षमा गरे ॥
(१९)

विंशे तु विष्णुना साक्षात्पृथोर्यज्ञेऽनुशासनम् ।
वरदानप्रसङ्गेन प्रीतिश्चाऽन्योन्यमीर्यते ॥

बीसौँमा विष्णुले साक्षात् पृथुका यज्ञमा गई ।
गर्नु भो उपदेशादि वरदान स्वयं दिई ॥
(२०)

पृथुना एकविँशे तु प्रजानामनुशासनम् ।
महासत्रे सुरादीनां महासदसि वर्ण्यते ॥

पृथुले एकबींशौँमा प्रजालाई दिई भर ।
देवतासाथमा ज्ञान दिए सत्र विषे तर ॥
(२१)

द्वाविंशे तु परं ज्ञानं पृथवे हरिशासनात् ।
सनत्कुमारो भगवानुपादिशदितीर्यते ॥

बाइसौँमा परं ज्ञान हरिले पृथुमा दिए ।
सनत्कुमारले तत्त्व पृथुमा जो भनी दिए ॥
(२२)

त्रयोविंशे सभार्यस्य वने नित्यसमाधितः ।
विमानमधिरूह्याथ वैकुण्ठगतिरीर्यते ॥

तेइसौँमा सभार्या नै वनमा गै गरे तप ।
अन्त्यमा मुक्त भै राजा गए वैकुण्ठमा तब ॥
(२३)
चतुर्विंशे प्रपौत्रात्तु पृथोः प्राचीनवर्हिषः ।
प्रचेतसां जनिस्तेभ्यो रुद्रगीतत्व वर्ण्यते ॥

भनिन्छ पृथुका पौत्र प्राचीननामवर्हिको ।
चौबीसौँमा प्रचेताको जन्म र रुद्रगीतको ॥
(२४)
प्रचेतस्सु तपस्यत्सु तत्पित्रे नारदो घृणी ।
प्राचीनवर्हिषेऽध्यात्मं पारोक्ष्येणाह पञ्चभिः ॥

पुरञ्जनकथाव्याजात्पञ्चविंशे तु नारदः ।
आत्मनो बुद्धिसङ्गेन विविधामाह संसृतिम् ॥

प्रचेतस्तु तपस्तीव्रं तप्यमानेषु नारदः ।
पुरञ्जनकथाकूटं प्राह प्राचीनवर्हिषे ॥

पच्चीसौँमा भने आत्मविद्या ती ब्रह्मपुत्रले ।
पुरञ्जनकथाकूट सुने प्राचीन बर्हिले ॥
(२५)
षड्विंशे मृगयाव्याजात्स्वप्रजागरणोक्तितः ।
सद्बुद्धित्यागयोगाभ्यां संसृतिः सा प्रपञ्च्यते ॥

मृगयाको गरी व्याज जाग्रत्स्वप्न भनी भ्रम ।
सद्बुद्धि त्याग योगैले भनिन्छ संसृतिक्रम ॥
(२६)
सप्तविंशे प्रियापुत्राद्यासक्त्या विस्मृतात्मनः ।
कालकन्याद्युपाख्यानैर्जरारोगाद्युदीर्यते ॥

प्रिया र पुत्रमा लिप्त भएर आफु बिर्सने –
लाई वृद्ध तथा रुग्ण बनाई लान्छ कालले ॥
(२७)
अष्टाविंशे तु वैदर्भ्याख्यानेन स्त्रीविचिन्तया ।
स्त्रीत्वं प्राप्तस्य दैवेन कदाचिन्मुक्तिरुच्यते ॥

वैदर्भीनामले जन्मे स्त्रीको चिन्तनले गरी ।
स्त्रीत्वमा प्राप्त राजाको भयो मुक्ति ढिलो गरी ॥
(२८)
ऊनत्रिंशे परोक्षार्थ व्याख्यानेनोपसंहृतम् ।
स्त्रीसङ्गतो भवस्त्वीशसङ्गान्मुक्तिरिति स्फुटम् ॥

उनन्तीश परोक्षार्थ व्याख्याबाट समाप्त भो ।
स्त्रीसङ्गले हुने जन्म ज्ञानले मोक्ष प्राप्ति भो ॥
(२९)
प्रसङ्गात् पञ्चभिः प्रोक्तं वृत्त प्राचीनवर्हिषः ।
वर्ण्यते च पुनर्द्वाभ्यां प्रस्तुतं प्रत्प्रचेतसाम् ॥

तत्र त्रिंशे तपस्तुष्टादीशाल्लब्धवरास्ततः ।
आगत्य वार्क्षीमुद्वाह्य राज्यं चक्रुरितीर्यते ॥
(३०)

एकत्रिंशे सुते दक्ष धुरं न्यस्य वने सताम् ।
नारदोक्तेन मार्गेण मुक्तिरुक्त्वा प्रचेतसाम् ॥

छोरा दक्षविषे राज्य सुम्पेर एकतीशमा ।
नारदोक्त लिई मार्ग तरे प्रचेत अन्तमा ॥
(३१)

श्रीमद्भागवतमहापुराणको चौथो स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।
हरि ॐ तत्सत् । श्रीकृष्णार्पणमस्तु



# पाँचौँ स्कन्ध

## श्रीगणेशाय नमः

नमः श्रीमत्परमहंसास्वाहितचरणकमलचिन्मकरन्दाय
भक्तजनमानसनिवासाय श्रीरामचन्द्राय ।

अथातः पञ्चमस्कन्धव्याख्यानेकविशेषवान् ।
प्रियव्रतान्वयो यत्र सप्रपञ्च प्रपञ्च्यते ॥

षड्विंशत्याधुनाध्यायैः पञ्चमे स्थानमीर्यते ।
लोकद्वीपादिमर्यादापालनाख्यमनेकधा ॥

पृथिव्युपर्यधोलोकैर्मर्यादा त्रिविधा मता ।
पुनश्चैकैकशस्तेषु मर्यादा बहुधा मता ॥

भुवि द्वीपादिमर्यादाः पाल्यन्ते राजभिः पृथक् ।
भूमेरुपरि देवाद्यैस्ततश्चाधोऽसुरादिभिः ॥

तत्राध्यायैस्तु विंशत्या प्रियव्रतपुरः सरैः ।
भुवि द्वीपादिमर्यादाः पालिता इति वर्ण्यते ॥

त्रिभिः सूर्यादिभिर्ज्योतिश्चक्रादिष्विति कीर्त्यते ।
अतलादिषु दैत्यादैः पालनञ्च ततस्त्रिभिः ॥

तत्र तु प्रथमेऽध्याये ज्ञानिनो राज्यनिर्वृतिः ।
पुनश्च ज्ञाननिष्ठेति त्रियव्रतकथाद्भुता ॥

वंशः प्रियव्रतस्यापि निवोध नृपसत्तमम् ।
यो नारदादात्मविद्यामधिगम्य पुनर्महिम् ॥
भुक्त्वा विभज्य पुत्रेभ्य ऐश्वरं समगात्पदम् ।

पैलोमा ज्ञानवान् राजा भए राज्य गरे सब ।
फेरि फर्केर ती राजा संन्यासमै गए तब ॥

(१)

द्वितीये प्रोक्तमाग्नीध्रचरित्रं स्त्रैणसम्मतम्।
पल्यां हि पूर्वचित्त्यां यो नाभिमुख्यानजीजनत् ॥

अस्मिन्वंशे प्रसिद्धोऽयमाग्नीध्रःस्त्रैणपुङ्गवः ।
विहसन्निव तस्येदं चरितं मुनिरव्रवीत् ॥

आग्नीध्र नृपको कार्य देखियो स्त्रैणसम्मत ।
जन्मिए पूर्व चित्तीमा नाभ्यादिपुत्र विश्रुत ॥

(२)

त्रृतीये चरितं नाभेः परं मङ्गलमीर्यते ।
यस्य यज्ञे प्रतीतः सन् पुत्रोऽभूद् ऋषभो हरिः ॥

तेस्रोमा नाभिको कार्य थियो अति प्रशंसित ।
जसको पुत्र भै जन्मे हरि नै ऋषभाभिध ॥

(३)

चतुर्थादित्रिभिः प्रोक्तमृषभस्येहितं महत् ।
लोकार्थं येन सत्कर्म नैष्कर्म्यञ्च निदर्शितम् ॥

चतुर्थे शतपुत्रस्य राज्यं तस्योपवर्ण्यते ।
यस्य राज्ये जनः सर्वः सन्तोषामृतनिर्वृतः ॥

उत्पत्ति सय छोराको गरिन्छ राज्यवर्णन ।
गरिन्छ राज्यमा सारा जनको सुखवर्णन ॥
(४)

पञ्चमे मोक्षधर्मोपदेशैः पुत्रानुशासनम् ।
उक्तं पारमहंस्यञ्च तस्य द्वन्द्वतितिक्षया ॥

धर्मोपदेश पाँचौँमा पुत्रमा अनुशासन ।
भने पारमहंस्याख्य द्वन्द्वादि सहनक्षम ॥
(५)

षष्ठे लीनाभिमानस्य देहत्यागक्रमाभिधा ।
प्रदहन्तं दवाग्निं यः पश्यन्नपि न पश्यति ॥

अभिमान भई लीन देहको त्याग हो जुन ।
डढ्छन् ऋषभ दावाग्नि बीचमा नै परीकन ॥
(६)

अध्यायानां त्रयेणैवमृषभाख्यानमीरितम् ।
अष्टभिर्भरताख्यानमतः प्रस्तूयतेऽमृतम् ॥

सप्तमे भरतो राज्ये चिरं यज्ञैर्हरिं भजेत् ।
आरा।ब्धकर्मनिर्वाणे हरिक्षेत्रेऽभजदहरिम् ॥

गरे भरतले यज्ञ हरिकीर्तन अन्त्यमा ।
आरब्ध कर्मले गर्दा गए गण्डकक्षेत्रमा ॥
(७)

अष्टमे भजतो विष्णुं तस्य कर्मान्तरायतः ।
एणरक्षाप्रसक्तस्य जातमेर्णत्वमीर्यते ॥

गरे भजन विष्ण्वाख्य ईशको तर मिर्गमा ।
भए आसक्त ती राजा जन्मिए मिर्गयोनिमा ॥
(८)

नवमे जडविप्रत्वे तस्य रागाद्यभावतः ।
भद्रकालीपशुत्वेऽपि निर्विकारत्वमीर्यते ॥

नवौँमा जड विप्राख्य भए रागादि वर्जित ।
कालीका वलिका लागि लाँदा पनि ती हर्षित ॥
(९)

दशमे क्षिपता राज्ञा शिविकां स्वां वहन्मुनिः ।
स्वदुर्वादानुवादेन विज्ञायाशु प्रसादितः ॥

एवं भूताविकारित्वमज्ञसर्वज्ञयोः समम् ।
इति सर्वज्ञतासिद्ध्यै रहूगणाकथेरणम् ॥

राजाको शिविका बोकी हप्की दप्की सबै सुनी ।
देखाए जडले ज्ञत्व डराए नृप ती अनि ॥
(१०)

एकादशे तु संपृष्टो रहूगणमहीभृता ।
उपादिशत्परं ज्ञानं स योगीति निगद्यते ॥

एघारौँमा गरे प्रश्न रहूगणाख्य भूपले ।
उपदेश गरे ज्ञान ज्ञानी जडाख्य विप्रले ॥
(११)

द्वादशे पुनरापृष्टः सन्देहेन महीभृता ।
स योगी सर्वसन्देहानपानुददितीर्यते ॥

बाह्रौँमा फेरि राजाले सोधे सन्देह भैकन ।
गरे भरतले सारा सन्देह चूर्ण ती कन ॥
(१२)

त्रयोदशे विरक्ताय वृथा तत्त्वनिरूपणम् ।
इति वैराग्य दार्ढाय भवाट्व्युपवर्ण्यते ॥

विरक्तजनका लागि वृथा तत्त्व निरूपण ।
वैराग्य दृढता निम्ति भवाट्व्युपवर्णन ॥
(१३)

चतुर्दशे भवारण्यरूपक व्याकृतिः कृता ।
प्रस्तुते तस्य गोमायुमशकाद्यर्थकल्पनम् ॥

चौधौँमा अटवी नाम भवको स्पष्टतासँग ।
भयो रूपकको व्याख्या व्वाँसादि कल्पना सँग ॥
(१४)

एवमष्टभिरध्यायैर्भरतस्योक्तमीहितम् ।
ततः पञ्चदशे तस्य कीर्त्यन्ते वंशजा नृपाः ॥

आठ अध्यायले पूर्ण भयो भरतकीर्तन ।
पन्ध्रौँमा उनको वंश क्रमले हुन्छ वर्णन ॥
(१५)

पूर्वोक्तद्वीपसिन्ध्वादिमानचिह्नस्वरूपतः ।
स्पष्टं प्रवक्तुमारब्धा पञ्चाध्यायी ततः परम् ॥

षोडशेऽधस्तथा चोर्ध्वं परितः सन्निवेशतः ।
मेरो स्थितिर्महीकञ्जकर्णिका चोपवर्ण्यते ॥

प्रियव्रतचरित्रोक्तौ योक्ता द्वीपादिकल्पना ।
तद्विशेषविजिज्ञासुः कथान्ते परिपृच्छति ॥

सोह्रौँमा तलका साथै माथिका र यताउता ।
मेरुस्वरूपका साथै पृथ्वीको दिव्यरूपता ॥
(१६)

ततः सप्तदशे गङ्गाऽगमनं तच्चतुर्दिशम् ।
इलावर्ते च रुद्रेण सङ्कर्षणनिवेषणम् ॥

पृथ्वीमा झर्नुभो गङ्गा सारा पाप पखाल्नु भो ।
इलावर्तविषे रुद्रै भै सङ्कर्षण पाल्नु भो ॥
(१७)

अष्टादशे ततो मेरोः पूर्वादिक्रमतोक्तिषु ।
त्रिषु चोत्तरवर्षेषु सेव्यसेवकवर्णनम् ॥

अठारौँमा भने मेरु पूर्वादि क्रमकीर्तन ।
तीन उत्तर वर्षैमा सेव्यसेवक वर्णन ॥
(१८)

ऊनविंशे किम्पुरुषे भारते चोपवर्ण्यते ।
सेव्यसेवकभावश्च भारतश्रैष्ठ्यमेव च ॥
किम्पूरुष सँगै वर्ष अनि भारतको पनि ।
सेव्यसेवक भावैले भनिन्छ श्रेष्ट हो भनी ॥
(१९)

विंशे प्लक्षादिषड्द्वीपस्थितिमाह सहार्णवै ।
लोकालोकस्थितिश्चान्तर्बहिर्भागादिमानतः ।।

विशौँमा प्लक्षद्वीपादि वर्षको स्थितिवर्णन ।
लोकालोकस्थिति बाह्य भित्रको दिनवर्णन ।।

(२०)

एवमध्यायविंशत्या भूमर्यादि निरूपिता ।
अतः परं द्युमर्यादापालनं त्रिभिरुच्यते ।।

एकीसमा भूमर्यादि सबैको हुन्छ कीर्तन ।
अध्याय तीनले हुन्छ द्युमर्यादिक वर्णन ।।

(२१)

द्वाविंशे सोमशुक्रादेः स्थानमाहोत्तरोत्तरम् ।
तत्तद्गत्यनुसारेण इष्टानिष्टे तथा नृणाम् ।।

सोमशुक्रादिको स्थान क्रमैले हुन्छ वर्णन ।
गतिका स्थितिले हुन्छ इष्टानिष्टादि कीर्तन ।।

(२२)

त्रयोविंशे ध्रुवस्थानं ज्योतिश्चक्राश्रय ततः ।
शिशुमारस्वरूपेण हरेश्च स्थितिरुच्यते ।।

भनिनेछ ध्रुवस्थान ज्योतिश्चक्राश्रयादिको ।
शिशुमारस्वरूपैले हरिको स्थिति आदिको ।।

(२३)

एवं त्रिभिर्द्युमर्यादापालनं वर्णितं तथा ।
अधोभुवनमर्यादापालनं त्रिभिरुच्यते ।।

चतुर्विंशे रवेरर्वाक् स्वर्भान्वादिस्थिति क्रमात् ।
अतलादिबिलस्वर्गमर्यादा सप्तवर्णिताः ॥

सूर्य र राहुहरूको गतिको सूक्ष्मकीर्तन ।
अतलादिहरू लोक सातैको हुन्छ वर्णन ॥
(२४)

पञ्चविंशे ततोऽधस्ताह शेषस्य संस्थितिम् ।
संजिहीर्षोरिदं काले यत्र रुद्रसमुद्भवः ॥

तल पातालमा बस्ने भनिन्छ शेषसंस्थिति ।
उनले नास्न चाहेमा रुद्रको हुन्छ विस्तृति ॥
(२५)

षड्विंशे तु ततोऽधस्तान्नरकस्थितिरुच्यते ।
पापिनो यत्र दह्यन्ते यमदूतैर्यथायथम् ॥

छब्बिसौँमा अझै भित्र भनिन्छ नारकी स्थिति ।
यमका दूतले तोक्छन् पापानुसारको गति ॥
(२६)

श्रीमद्भागवतमहापुराणको पाँचौँ स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।
हरि ॐ तत्सत्
श्रीकृष्णार्पणमस्तु



# छैटौँ स्कन्ध

**श्रीगणेशाय नमः**

पुण्यारण्ये नृसिंहैकनामसिंहो विराजते ।
यन्नादतः पलायन्ते महाकल्मषकुञ्जराः ।।

विसर्गसम्भवान् जीवान्स्वमर्यादासु संस्थितान् ।
विष्णुः पात्यखिलै रूपैरित्येवं पञ्चमे स्थितम् ।।

अध्यायैकोनविंशत्या षष्ठे पोषणमुच्यते ।
अतिलङ्घितमर्यादभक्तरक्षणलक्षणम् ।।३।।

अजामिलो मनुष्येषु महापापो यथाऽवितः ।
विश्वरूपादिघाती च यथा देवेषु वासवः ।।

अजामिलस्य भक्तत्वं विष्णुदूतैर्निरूपितम् ।
सङ्केतभगवन्नामपुत्रस्नेहानुषङ्गजम् ।।

इन्द्रोऽपि भगवद्भक्तः सख्येनोपेन्द्रसेवकः ।
तदधीनसुरैश्वर्यशत्रुनिर्जयजीवितः ।।

तत्रादौ त्रिभिरध्यायैरजामिलकथोच्यते ।
विश्वरूपकथा षड्भिरिन्द्रदोषोक्तये ततः ।।

इन्द्रस्यैव तु दोषेक्त्यै वृत्राख्यानं ततोऽष्टभिः ।
द्वाभ्याञ्च मरुदाख्यानमेवं प्रकरणक्रमः ।।

तत्रादौ प्रथमे विष्णोर्दूतैः पातकिमोचने ।
तत्पापख्यापनायोक्तं याम्यैर्धर्मादिलक्षणम् ।।

पैलोमा विष्णुका दूतद्वारा पातकिमोचन ।
त्यसैको नै उपाख्यान भनिन्छ धर्मलक्षण ॥

(१)

द्वितीयं वैष्णवैर्याम्यान्नाममहात्म्यमद्भुतम् ।
श्रावयित्वा द्विजो विष्णोर्लोकं नीत इतीर्यते ॥

विष्णु र यमका दूतद्वारा महात्म्य नामको ।
सुनेर द्विजले पाए सालोक्य विष्णुधामको ॥

(२)

तृतीये तु यमेनापि वैष्णवोत्कर्षवर्णनैः ।
सान्तयित्वा स्वदूतास्ते वैष्णवे किङ्करीकृता ॥

यमले पनि तेस्रोमा वैष्णवीकीर्तिवर्णन ।
गर्दै स्वदूतलाई नै बनाए वैष्णवी जन ॥

(३)

चतुर्थादित्रिभिर्विश्वरूपजन्मविवक्षया ।
प्रचेतः सुतदक्षस्य वंशतावत्प्रतन्यते ॥

चतुर्थे तु प्रजासृष्ट्यै दक्षेणाराधनं हरेः ।
तपसा हंसगुह्याख्यस्तोत्रेण च निरूप्यते ॥

प्रसक्तानुप्रसक्तेन स्वायम्भुव सुतान्वये ।
नामप्रभावमाकर्ण्य वंशव्यासं बुभुत्सते ॥

सन्तान सृष्टिका निम्ति दक्षले हरिकीर्तन ।
हंसगुह्याख्य स्तोत्रैले गरेको हुन्छ वर्णन ॥

(४)

पञ्चमे नारदेनाथ वाचः कूटैस्तु नाशितान् ।
सुतानाकर्ण्य दक्षोऽमुं शशापेति निरूप्यते ॥

दिए नारदले ज्ञान दक्षपुत्रहरूकन ।
रिसाई दक्षले शाप दिए नारदजीकन ॥
(५)

षष्ठे दक्षेण सृष्टायां कन्याषष्ट्यां प्रकीर्तिताः ।
पृथग्वंशा यतो जातो विश्वरूपो दितेः सुतः ॥

दक्षले फेरि जन्माए साठी छोरीहरू स्वतः ।
सन्तान फैलियो जन्मे विश्वरूप दितीसुत ॥
(६)

सप्तमे विश्वरूपोऽसौ पौरोहित्ये वृतः सुरै ।
गुरुणा सम्परित्यक्तैः पौरोहित्यमथाकरोत् ॥

गुरुले जब छोडेथे तत्पश्चात् आफ्नू ली हित ।
विश्वरूप भए द्यौताहरूका जो पुरोहित ॥
(७)

अष्टमे विश्वरूपस्तु वर्म नारायणात्मकम् ।
इन्द्राय प्राह येनेन्द्रो गुप्तो दैत्यानथाजयत् ॥

आठौँमा विश्वरूपैले वर्म नारायणी रवि ।
इन्द्रलाई भने किन्तु दैत्यलाई दिए हवि ॥
(८)

नवमे विश्वरूपे तु हते शक्रेण कोपतः ।
त्वष्ट्रा चोत्पादिते वृत्रे भीतैर्देवैर्हरेः स्तुतिः ॥

नवौँमा विश्वरूपै ती इन्द्रबाट भए हत ।
त्वष्ट्राले वृत्र जन्माए डराए देवता स्वतः ॥
(९)

दशमे केशवादिष्टदध्यङ्ङस्थिजवज्रधृत् ।
इन्द्रोऽयुध्यत वृत्रेण सासुरेण सनिर्जरः ॥

दशौँमा दधिचीअस्थिद्वारा भो वज्रनिर्मित ।
गरेथे वृत्रका साथ इन्द्रले युद्ध दुर्जित ॥
(१०)

एकादशे तु वृत्रस्य युध्यमानस्य वज्रिणा ।
भक्तिज्ञानबलोदर्काश्चित्रा वाचोऽनुवर्णिताः ॥

एघारौँमा लडाका ती वृत्रको ज्ञानभक्तिले ।
लवालव भरीपूर्ण सुने वचन इन्द्रले ॥
(११)

द्वादशेऽतिविषण्णेन स्मयमुत्साहितेन तु ।
महेन्द्रेण महायुद्धे वृत्रस्य वध ईर्यते ॥

बाह्रौँमा छक्क भैँ पर्दै उत्साहित भईकन ।
इन्द्रले वृत्रको हत्या गरेको हुन्छ वर्णन ॥
(१२)

त्रयोदशे तु वृत्रस्य ब्रह्महत्यामहाभयात् ।
चिरं नष्टोऽवितः शक्रो विष्णुनेति निरूप्यते ॥

तेह्रौँमा ब्रह्महत्याको इन्द्रलाई भयो डर ।
विष्णुले गर्नुभो रक्षा ब्रह्महत्या भयो पर ॥
(१३)

वृत्रस्यज्ञानभक्त्यादि श्रुत्वा पृष्टः परीक्षिता ।
हेतुमाह चतुर्भिस्तत्प्राग्जन्म चरितोक्तिभिः ॥

चतुदर्शे तु सहसा कृच्छ्रलब्धे सुते मृते ।
चित्रकेतोरतिस्नेहादतिशोको निरूप्यते ॥

वृत्रको ज्ञानभक्त्यादि सोधेथे नृपले जब ।
शुकले त्यसको हेतु पूर्व जन्म भने सब ॥

यसकै लागि चौधौँमा हर्षशोकात्मकव्यथा ।
भनियो चित्रकेतुको पुत्रप्राप्त्यादिको कथा ॥

(१४)

ततः पञ्चदशे चित्रकेतोः शोकापनोदनम् ।
कृतं तत्त्वोपदेशेन नारदेनाङ्गिरोयुजा ॥

पन्ध्रौँमा अनि राजाको शोकलाई हटाउन ।
अङ्गिरा नारदै आई गरे सत्तत्त्व वर्णन ॥

(१५)

षोडशे तत्सुतोक्त्यैव विशोकीकृत्य तं नृपम् ।
आदिदेश महाविद्यां नारदः शेषतोषणीम् ॥

सोह्रौँमा उनकै पुत्रद्वारा विशोक ती बने ।
शेषलाई खुशी पार्न ज्ञान नारदले भने ॥

(१६)

ततः सप्तदशेऽमोघमहर्धिं प्राप्य खेचरन् ।
विहस्य गिरिशं शापादुमाया वृत्रतां गतः ॥

सत्रौँमा योगको शक्ति पाएर खेचरै बनी ।
हाँस्यो उमेश देखेर भो वृत्र शापले अनि ॥
(१७)

आदित्यानां चतुर्थस्य त्वष्टुर्वंशप्रसङ्गतः ।
प्रोक्तमिन्द्रकृतं विश्वरूपवृत्रवधादिकम् ॥

अदितेः पञ्चमादीनां पुत्राणामन्वयोक्तिभिः ।
अष्टादशे दितेर्गर्भे शक्रेण मरुतां भिदाः ॥

त्वष्टुर्वंशमनुक्रम्य सप्रसङ्ग यथाक्रमम् ।
आदित्यानामथ्यान्येषां वंशानाह मुनीश्वर ॥

त्वष्टाको वंशमा आयो कथा जो वृत्रको अनि ।
जन्मिए आदितीबाट वायु र सूर्य नै पनि ॥
(१९)

उनविंशे तु यत्प्रोक्तं कश्यपेनादितेर्व्रतम् ।
तदेव विवृतं लोकहिताय हरितोषणम् ॥

कश्यपैले बताएथे दितीका निंति जो व्रत ।
हरिलाई खुशी पार्न भनिन्छ त्यै यथार्थतः ॥
(२०)

श्रीमद्भागवतमहापुराणको छैटौँ स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।

हरि ॐ तत्सत्

श्रीकृष्णार्पणमस्तु



# सातौँ स्कन्ध

## श्रीगणेशाय नमः

स्वभक्तपक्षपातेन तद्विपक्षविदारणम् ।
नृसिंहमद्भूतं वन्दे परमानन्दविग्रहम् ॥

ऊतिः पञ्चदशाध्यायैः सप्तमे वर्ण्यतेऽधुना ।
ऊतिश्च वासना प्रोक्ता तत्तत्कर्मानुसारिणी ॥

अशुभा च शुभा चेति द्विधा सा हेतु भेदतः ।
अशुभा महतां कोपाच्छुभा महदनुग्रहात् ॥

हरेर्द्वारपयोर्यद्वद्वैकुण्ठे वसतोरपि ।
चतुःसनरुषा विष्णुद्वेषाद्यशुभवासना ॥

यथा च दैत्यगर्भेऽपि प्रह्लादस्य सतः स्थिरा ।
नारदानुग्रहादास विष्णौ सद्भक्तिवासना ॥

स्वभक्तञ्च सदा विष्णुर्द्विषन्तमपि रक्षति ।
तृतीयेऽथ भवे द्वास्थावकरोदात्मसात्पुनः ॥

अतो मनीषिणा यत्नः कार्यो महदनुग्रहे ।
इत्येतदर्थभूतीनामत्र लक्षणमुच्यते ॥

तत्रादौ दशभिर्दैत्यतत्पुत्रमतिभेदतः ।
महत्कोपानुकम्पोत्थवासना भेद उच्यते ॥

सद्वासना च युज्येत कर्मभिः शुद्धचेतसः ।
परैस्तु पञ्चभिस्तस्मात्क्रियते धर्मनिर्णयः ॥

यदुक्तं पूर्वस्कन्धान्ते –
हतपुत्रा दितिः शक्रः पार्ष्णिग्राहेण विष्णुना ।
मन्युना शोकदीप्तेन ज्वलन्ती पर्यचिन्तयत् ॥

तत्र तु प्रथमेऽध्याये हिरण्यकशिपोः सुते ।
विष्णुभक्ते विरोधस्तु विप्रशापज ईर्यते ॥

हिरण्यकशिपैका जो विष्णुभक्त थिए सुत ।
विरोध जो भयो हेतु थियो ब्राह्मणशाप त ॥
(१)

द्वितीये विष्णुरोषेण लोकं विप्लाव्य दानवैः ।
तद्धतभातृपुत्रादीनितिहासैरसान्त्वयन् ॥

विष्णुको रिसले गर्दा दैत्यले लोक पीडियो ।
मर्‍यो हिरण्यको भाइ सान्त्वना उसले दियो ॥
(२)

तृतीये तस्य तपसा तप्तं वीक्ष्य जगद्विधिः ।
आगत्यविस्मितस्तेन संस्तुतश्च वरानदात् ॥

हिरण्यको तपस्याले हल्लियो लोक थर्थर ।
ब्रह्मा आए खुशी पार्‍यो ब्रह्माले दिनुभो वर ॥
(३)

चतुर्थे तु वराँल्लब्ध्वा विजित्याखिललोकपान् ।
विष्णुद्वेषेण तान्सर्वान्दैत्येन्द्रः समपीडयत् ॥

चारौँमा वर पाएर लोकपाल सबै जिती ।
विष्णुका रिसले गर्दा सतायो दुष्टले अति ॥
(४)

पञ्चमे गुरुतोऽधीतं त्यक्त्वा विष्णोस्ततोरतम् ।
घातयन्द्विपसर्पाद्यैः सुतं दैतो नचाशकत् ॥

पाँचौँमा गुरुको शिक्षा त्यागेर विष्णुमा रत ।
छोराको दैत्यले खोज्यो हत्या गर्न यथार्थतः ॥
(५)

षष्ठे गुरौ गृहे व्यग्रे प्रह्लाद दैत्यवालकान् ।
अनुकम्प्य परं तत्त्वं नारदोक्तमुपादिशत् ॥

गुरुजी व्यस्त देखेर प्रह्लादले सखीकन ।
बताए विष्णुको भक्ति नारदोक्त भनीकन ॥
(६)

सप्तमे मातृगर्भस्थे स्वस्मिन्नारदभाषितम् ।
प्रह्लादो वर्णयामास शिष्यप्रत्ययसिद्धये ॥

आमाकै गर्भमै तत्त्व भने नारदले जुन ।
त्यही प्रह्लादले तत्त्व भने साथीहरूकन ॥
(७)

अष्टमेऽतिरुषा सूनुं निघ्नन् दैत्यो हतः स्वयम् ।
आविर्भूय नृसिंहेन स च ब्रह्मादिभिः स्तुतः ॥

रिसाई दैत्यले छोरो मार्न खोज्यो नृसिंहले ।
मारे कशिपु निस्केर ब्रह्मादिले गरे स्तुति ॥
(८)

नवमे ब्रह्मणा भीत्या चेदितोऽसुरबालकः ।
कोपं प्रशमयन्नस्तौन्नृसिंहमतिभीषणम् ॥

ब्रह्माजीले डराएर भने प्रह्लादजीकन ।
प्रह्लादले खुशी पारे गरेर स्तुति तत्क्षण ॥
(९)

दशमे त्वनुगृह्यामुं भक्तमन्तर्हिते हरौ ।
प्रसङ्गाद्धरिणा रुद्रे कृतोऽनुग्रह ईर्यते ॥

भक्तलाई कृपा गर्दै अन्तर्धान भए हरि ।
हरिले रुद्रउद्धार गरे प्रसङ्गले गरी ॥
(१०)

तदेवं दशभिर्ज्ञानभक्तियोगावुदीरितौ ।
अथ पञ्चभिरध्यायैः कर्मयोगोऽनुवर्ण्यते ॥

एकादशे नृणां धर्माः साधारण्येन वर्णिताः ।
विशेषेणं च वर्णानां मुख्यामुख्यश्च योषितम् ॥

एघारौँमा नृको धर्म सामान्यले बताइयो ।
विशेषले त वर्णीको नारीको क्यै बताइयो ॥
(११)

द्वादशे वर्ण्यते धर्मो ब्रह्मचारिवनस्थयोः ।
चतुर्णामाश्रमाणाञ्च साधारण्येन कश्चन ॥

भनिन्छ धर्म बाह्रौँमा ब्रह्मचारीवनस्थको ।
चारै आश्रमको सूक्ष्म सामान्यमा समष्टिको ॥
(१२)

त्रयोदशे यतेधर्मः साधकस्योच्यते महान् ।
अवधूतेतिहासेन सिद्धावस्था च वर्ण्यते ॥

तेह्रौँमा यतिको धर्म अनि साधकको पनि ।
भनिन्छ अवधूतैको सिद्धावस्थादिको अनि ॥
(१३)

चतुर्दशे गृहस्थस्य परमो धर्म ईर्यते ।
देशकालादिभेदेन पुनः श्रेयो विशेषकृत् ॥

गृहस्थ धर्म चौधौँमा परमै धर्म हो भनी ।
भनिन्छ देशकालादि भेदले श्रयको पनि ॥
(१४)

ततः पञ्चदशे सर्ववर्णाश्रमनिबन्धम् ।
सारतःसङ्ग्रहेणाथ वर्ण्यते मोक्षलक्षणम् ॥

पन्ध्रौँमा चार वर्णैको साथै आश्रमको पनि ।
सारसङ्क्षेपका साथ भनिन्छ मोक्षको अनि ॥
(१५)

श्रीमद्भागवतमहापुराणको सातौँ स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।

हरि ॐ तत्सत्

श्रीकृष्णार्पणमस्तु



# आठौँ स्कन्ध

## श्रीगणेशाय नमः

नमः श्रीपरमहंसास्वादितचरणकमलचिन्मकरन्दाय
भक्तजनमानसनिवासाय श्रीरामचन्द्राय ॥

अथाष्टमे चतुर्विंशत्यध्यायैर्मनुवर्णनम् ।
तत्सुतैर्ऋषिदेवेन्द्रैर्मूर्तिभिश्च हरेः सह ॥

प्रतिमन्वन्तरञ्चैव मन्वाद्याः षट् पृथक्पृथक् ।
प्रवर्तयन्ति सद्धर्मान्पालन्त्याचरन्ति च ॥

अतो मन्तरस्योक्तं सद्धर्म इति लक्षणम् ।
येन वै क्रियमाणेन नरो न निरयं व्रजेत् ॥

तत्र तु प्रथमे स्वायम्भुवः स्वारोचिषस्तथा ।
उत्तमस्तामसश्चेति चतुर्मनुनिरूपणम् ॥

स्वायम्भुवेऽन्तरेऽनन्तदुरन्तगुणवर्णनम् ।
मुदितः परिपप्रच्छ सर्वमन्वन्तरस्थितिम् ॥

प्रथमाध्यायमा स्वायम्भुवस्वारोचिषै अनि ।
तेस्रो उत्तम चारौँ हुन् मनु तामस ती पनि ॥
(१)

द्वितीये तु गजेन्द्रस्य गजीभिः क्रीडतो जले ।
दैवाद्ग्राहगृहीतस्य हरिस्मृतिरुदीर्यते ॥

दोस्रोमा गजले क्रीडा गजीका साथमा गर्‍यो ।
गोहीले पक्रियो खुट्टा हरिको सम्झना गर्‍यो ॥
(२)

तृतीये तु गजेन्द्रेण स्तुतो हरिरुपेत्य तम् ।
समुद्‌दधार तं ग्राहाद्‌ग्राहं देवलशापतः ॥

तेस्रोमा गजको स्तोत्र सुनेर पाल्नुभो हरि ।
उद्‌धार गर्नुभो हात्ती परेथ्यो शापले गरी ॥
(३)

चतुर्थे तु तयोर्ग्राहः प्राप गन्धर्वतां पुनः ।
गजं स्वपार्षदं कृत्वा हरिर्निन्ये निजं पदम् ॥

चारौँमा ग्राहले पायो फेरि गन्धर्वको पद ।
आफ्नै पार्षदमा हात्ती लानुभो हरिले स्वतः ॥
(४)

अमृताख्यानमष्टाभिरध्यायैरनुवर्ण्यते ।
स्वभक्तपक्षपातेन यत्र योषायिते प्रभोः ॥

पञ्चमे पञ्चमञ्चाथ षष्ठं चाकथयन्मनुम् ।
विप्रशापाच्च निःश्रीकैः कृतां देवैर्हरेः स्तुतिम् ॥

आठ अध्यायले भन्छ पीयूषमथनै गरी ।
भक्तका पक्षमा लागी बनेका मोहिनी हरि ॥

पाँचोटा मनुका साथै छैटौँको हुन्छ वर्णन ।
विप्रको शापले गर्दा द्यौताको हुन्छ भ्रंशन ॥
(५)

षष्ठे पुनः स्तुतिर्विष्णावाविर्भूते सुरैः कृता ।
तन्मन्त्राच्चासुरै साकममृतार्थे महोद्यमः ॥

छैटौँमा फेरि द्यौताले गरे श्रीविष्णुको स्तव ।
सल्लाहा विष्णुको पाए अमृतार्थ सबै मिल ॥

(६)

सप्तमे मथनोद्भूतविषभीत्याखिलैर्जनैः ।
स्तुतः सन्कृपया रुद्रः पपौ विषमितीर्यते ॥

पीयूषमन्थनै गर्दा निस्क्यो विष सबै डरे ।
शिवलाई खुशी पार्दा विष पान सबै गरे ॥

(७)

अष्टमे मथ्यमानेऽब्धौ लक्ष्म्या विष्णौ वृतेऽसुरैः ।
धन्वन्तरेर्हृते सोमे मोहिन्युद्भव ईर्यते ॥

मथ्ता अमृत लक्ष्मीजी आइन् श्रीविष्णुले लिए ।
खोसे असुरले सोम भगवान् मोहिनी भए ॥

(८)

नवमे मोहितैर्दैत्यैरर्पितेऽमृतभाजने ।
तद्वञ्चनेन देवेभ्योऽमृतं दत्तं तयेर्यते ॥

दैत्य मोहित भै सुम्पे पीयूष विष्णुमा जब ।
दैत्यलाई छली बाँडे पीयूष सुरमा तब ॥

(९)

दशमे मत्सराद्देत्यैरारब्धे तु मृधे सुरैः ।
दैत्यमायाविषण्णेषु देवेष्वाविर्बभौ हरिः ॥

तदेवममृतावाप्तिर्नाभक्तानामितीरितम् ।
भक्तमत्सरतः प्राणहानिः पुनरुदीर्यते ॥

दशौँमा रिसले दैत्यद्वारा युद्ध हुँदो भयो ।
मायाले लट्ठिए द्यौता प्राकट्य विष्णुको भयो ।।
(१०)

एकादशे तु देवेषु दैत्यघातिषु नारदः ।
देवानवारयञ्छुक्रो मृतान्दैत्यानजीवयत् ।।

द्यौताले देत्यको हत्या गरे नारद गैकन ।
रोके दैत्य मरेका ती बचाए शुक्र गैकन ।।
(११)

द्वादशे मोहिनीरूपविभ्रमालोकनोत्सुकम् ।
भवं सम्मोहयामास हरिः पुनरसान्त्वयन् ।।

बाह्रौँमा मोहिनीरूप हेर्नलाई गए भव ।
लट्ठिए शिव त्यो देखी सम्झाए विष्णुले तब ।।
(१२)

त्रयोदशे तु वर्ण्यन्ते सप्तमादीन्यनुक्रमात् ।
मन्वन्तराणि सर्वाणि यद्विधानि पृथक् पृथक् ।।

सातोटा मनुका साथै अरू मन्वान्तरादिको ।
भनिन्छ क्रमले बाँकी ६ ओटा मनुवंशको ।।
(१३)

चतुर्दशे तु सर्वेषां मन्वादीनां यथायथम् ।
पृथक्कर्माणि वर्ण्यन्ते भगवद्वशवर्तिनाम् ।।

सबै नै मनुको यस्तै जे जस्तो छ यथा सब ।
भनिनेछन् पृथक् गर्दै भगवद्भक्त ती सब ।।
(१४)

बलिं पञ्चदशे विश्वजिताचार्य अयाजयन् ।
ततोऽसौ स्वर्गमजयद्भयाद्देव निलिल्यिरे ॥

पन्ध्रौँमा बलिले यज्ञ गरे विश्वजितात्मक ।
जिते स्वर्ग सबै भागे भय मानी सुरादिक ॥
(१५)

षोडशे पुत्रनाशेन शोचन्त्या अदितेः पतिः ।
प्रार्थितः कश्यपः प्राह पयोव्रतमितीर्यते ॥

सोह्रौँमा पुत्र मागेको देखी कश्यपले ततः ।
भन्दछन् पुत्रका लागि पत्नीलाई पयोव्रत ॥
(१६)

ततः सप्तदशेऽदित्या कृते तस्मिन्व्रते हरिः ।
तत्कामपूरणायादौ तत्पुत्रोऽभूदितीर्यते ॥

सत्रौँमा अदितीद्वारा गरियो त्यो पयोव्रत ।
जन्मिए पुत्र भै विष्णु वामनाख्य भई स्वतः ॥
(१७)

ततस्त्वष्टादशे भूत्वा वामनः सत्कृताऽखिलैः ।
यज्ञं गतस्ततस्तेन सत्कृत्योक्तो वरान्वृणु ॥

भई वामन जन्मिए सत्कार सबले गरे ।
बलिका यज्ञमा जाँदा माग्न नै प्रार्थना गरे ॥
(१८)

उनविंशे तु हरिणा याचिता च पदत्रये ।
प्रतिश्रुते च बलिना जानन्भृगुरवारयत् ॥

माग्नु भो हरिले तीन पाउ भूमि त्यहाँ जब ।
बलिलाई न द्यौ भन्दै रोके शुक्रजीले तब ॥
(१९)

विंशे त्वनृतभीतोऽसौ ज्ञात्वापि कपटं हरेः ।
ददावेव ततो विष्णुः सहसाऽवर्धतोऽद्भुतम् ॥

झुटो हुने भई त्रास जानी कापट्य विष्णुको
दिए दान बढे विष्णु विराट् भई विचित्रको ॥
(२०)

एकविंशे पदापूर्तिमिषेण बलिबन्धनम् ।
विष्णुना कृतमुत्कर्ष तस्य ख्यापयितुं जने ॥

एक पाउ कमी भन्दै बाँधिए बलि पाशले ।
विष्णुविक्रमको कीर्ति फैलियो पूर्णरूपले ॥
(२१)

द्वाविंशे तु प्रसन्नः सन् प्रस्थाप्य सुतलं बलिः ।
दत्त्वा वरान् हरिर्न्यूनं मत्वा तद्द्वारपोऽभवत् ॥

हरि प्रसन्न भै राखे लगी सुतलमा बलि ।
थोरै भयो भनी ठानी द्वारपाल भए छली ॥
(२२)

त्रयोविंशे बलौ याते सुतले सपितामहे ।
उपेन्द्रेण दिवं गत्वा पूर्वजन्मोदते हरिः ॥

पितामह लिई साथ गए सुतलमा बलि ।
उपेन्द्रले दिए स्वर्ग इन्द्रलाई बनी छली ॥
(२३)

चतुर्विंशे प्रसङ्गेन मत्स्यरूपेण शार्ङ्गिणः ।
लीलोच्यते यतः सत्यव्रतरक्षा महार्णवे ॥

प्रसङ्गले यहाँ आयो हरिको मत्स्यरूपको ।
लीला प्रलयमा रक्षा गरेको व्रत सत्यको ॥

(२४)

श्रीमद्भागवतमहापुराणको आठौँ स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।

हरि ॐ तत्सत्

श्रीकृष्णार्पणमस्तु



# नवौँ स्कन्ध

## श्रीगणेशाय नमः

गुणा यं गुणताव्याप्त्यै वृणते करुणानिधिम् ।
तमहं शरणं यामि परमानन्दमाधवम् ॥

त्रिगुणाष्टभिरध्यायैर्वैवस्वतसुतान्वयः ।
नवमे कृष्णसत्कीर्तिप्रसङ्गाद्य वितन्यते ॥

एवमुक्तोऽष्टमस्कन्धे सद्धर्मः सत्त्वशोधकः ।
कर्तृपालकवक्त्रादिमन्वादिनां निरूपणैः ॥

सद्धर्मशुद्धसत्त्वानामन्तरङ्गेशसत्कथा ।
सूर्यसोमान्वयाख्यानैरधुना सङ्गतोच्यते ॥

तत्र च –
त्रयोदशाभिरध्यायैः सूर्यवंशोऽनुवर्ण्यते ।
एकादशाभिरध्यायैः सोमवंशस्ततः परैः ॥

तत्र तु प्रथमेऽध्याये वैवस्वतसुतान्वये ।
सोमवंशप्रवेशोक्त्यै सुद्युम्नस्त्रीत्वमुच्यते ॥

भनिन्छ पहिले वैवस्वतका पुत्रको अनि ।
श्रीचन्द्रवंशको मूल स्त्रीत्व सुद्युम्नको पनि ॥
(१)

द्वितीये मनुपुत्राणां द्वावपुत्रौ विरागतः ।
करूषकादिपञ्चानां वंशानाह लघुक्रमात् ॥

मनुका दुइटा छोरा निःसन्तान हुँदा भए ।
करूषादिक पाँचैका सन्तान फैलँदा भए ॥
(२)

तृतीये मनुपुत्रस्य शर्यातेः कीर्त्यतेऽन्वयः ।
यत्र सौकन्यमाख्यानं रैवतञ्च महाद्भुतम् ॥

तेस्रोमा मनुका पुत्र शर्यातिवंशको कथा ।
भनिन्छ र सुकन्याको रैवत नृपको कथा ॥
(३)

चतुर्थ मनुपुत्रस्य नभगस्य कथोच्यते ।
तत्सूनोश्चाम्बरीषस्य कृत्या प्रतिहता यतः ॥

चारौँमा मनुका पुत्र नभगैको कथा अनि ।
अम्बरीष कथा भन्दै कृत्याका नाशको पनि ॥
(४)

पञ्चमे विष्णुचक्रन्तु प्रसाद प्राणसङ्कतात् ।
दुर्वासा रक्षितस्तेन तथा तद्वृत्तमीर्यते ॥

पाचौँमा विष्णुको चक्र खुशी पारी सुखी भए ।
दुर्वासाको गरी रक्षा अम्बरीष खुशी भए ॥
(५)

तत्र षष्ठे शशादादिर्मान्धात्रन्तो निरूप्यते ।
प्रसङ्गात्सौभरेराख्या मान्धातृतनया पति ॥

शशादादि हुँदै पश्चात् मान्धातावंशले भरे ।
मान्धातातनया साथ बिहा सौभरिले गरे ॥
(६)

मान्धातुरन्वयः प्रोक्ताः सप्तमे यत्र गीयते ।
पुरुकुत्सस्य चाख्यानं हरिश्चन्द्रस्य चोत्तमम् ॥

मान्धाता वंशविस्तार भन्दै गै क्रमले अनि ।
पुरुकुत्स हरिश्चन्द्र साथै उत्तमको पनि ॥
(७)
अष्टमे रोहितस्योक्तो वंशो यत्राभवन्नृपः ।
सगरः कपिलाक्षेपान्निर्दग्धा यस्य सूनवः ॥

वंश रोहितमा जन्मे सगरादि अरू नृप ।
हेर्दा कपिलले छोरा डढे सगरका सब ॥
(८)
नवमेँऽशुमतो वंश खट्वाङ्गावधि वर्ण्यते ।
गङ्गां भूतलमानिन्ये यस्य पौत्रो भगीरथः ॥

नवौँमा अंशुमान्वंश भन्दै खट्वाङ्गकातक ।
जसका नातिले ल्याए गङ्गा भगीरथाभिध ॥
(९)
दशमे प्राह खट्वाङ्गवंशे श्रीरासम्भवम् ।
तच्चरित्रञ्च लङ्केशं हत्वाऽयोध्यागमावधि ॥

खट्वाङ्गवंशमा जन्मे राम चरित्रनायक ।
मारी रावण ती फर्के अयोध्या कीर्तिदायक ॥
(१०)
ततश्चैकादशेऽयोध्यामावसन्ननुजैः सह ।
यज्ञादि यच्चकारेशो रामस्तदनुवर्ण्यते ॥

एघारौँमा अयोध्यामा बसेर भाइकासँग ।
गरेथे रामले यज्ञ भनिन्छ त्यो क्रमैसँग ।।

(११)

द्वादशे रामपुत्रस्य कुशस्यान्वय उच्यते ।
एवमिक्ष्वाकुपुत्रस्य शशादस्येरितोऽन्वयः ।।

गरिन्छ रामका पुत्र कुशको वंश वर्णन ।
गरिन्छ वंश इक्ष्वाकु शशादसम्म कीर्तन ।।

(१२)

इक्ष्वाकोरेव पुत्रस्य निमेर्वंश त्रयोदशे ।
वर्ण्यते जज्ञिरे यत्र ब्रह्मज्ञा जनकादयः ।।

इक्ष्वाकुपुत्र तेह्रौँमा निमिको वंशमै अनि ।
भए जनक सद्ज्ञानी अरू राजाहरू पनि ।।

(१३)

चतुर्दशादिभिः सोमवंशमाहासमाप्तितः ।
यस्मिनैलादयो भूपाः कीर्त्यन्ते पुण्यकीर्तयः ।।

चतुर्दशे गुरोः पत्न्यां तारायां सोमजाद्बुधात् ।
जातश्चैलःषड्उर्वश्यामायुमुख्यानजीजनत् ।।

गुरुपत्नी त तारामा चन्द्रका बुध पुत्रका ।
जन्मिए ऐल आय्वादि उर्वशीबाट षष्टका ।।

(१४)

ततः पञ्चदशे गाधिरैलपुत्रान्वयोऽजनि ।
यद्दौहित्रसुतो रामः कार्तवीर्यमहन् रुषा ।।

पन्ध्रौँमा ऐलवंशैमा जन्मिए गाधि नै त जो ।
जस्का पुत्र भए राम मारियो कार्तवीर्य जो ॥
(१५)
षोडशेऽथार्जुनसुतैर्जमदग्नौ हते मुहुः ।
रामात्क्षात्रवधः प्रोक्तो विश्वामित्रस्य चान्वयः ॥

अर्जुनै पुत्रले मारे सोह्रौँमा जमदग्नि जो ।
रामद्वारा मरे क्षत्री विश्वामित्रान्वयादि जो ॥
(१६)
आयोः सप्तदशे त्वैलज्येष्पठपुत्रस्य पञ्चसु ।
सुतेषु क्षत्रवृद्धादि चतुर्णां वंशवर्णनम् ॥

आयुका ज्येष्ठ छोरा ती ऐलका पाँच पुत्रमा ।
क्षत्रवृद्धादि चाडाका वंशवर्णन सत्रमा ॥
(१७)
अष्टादश ययातेस्तु नाहुषस्य कथोच्यते ।
यस्य पञ्चसु पुत्रेषु कनीयानग्रहीज्जराम् ॥

अठारौँमा कथा आयो नाहुषाख्य ययातिको ।
जसका पाँच छोरामा लिए वय कनिष्ठको ॥
(१८)
उनविंशे ययाति स्वं चेष्टितं नन्वजोपमम् ।
देवयानीं समाश्राव्य विरक्तो मुक्तिमावह ॥

ययाति निज आफैँले बोकाको उपमा दिई ।
बताई देवयानीमा भए मुक्त विरक्तिई ॥
(१९)

विंशे पितृप्रसादाप्तराजासनमहोन्नतेः ।
पूरोर्वंशे हि दौष्यन्तेर्भरतस्येर्यते यशः ॥

पितृप्रसाद पाएर भए पूरु ठूला नृप ।
उनकै वंशमा जन्मे भरताख्य महान्नृप ॥
(२०)

एकविंशे तु दौष्यन्तेः सुतस्यान्वय उच्यते ।
रन्तिदेवाजमीढादेर्यत्र कीर्तिः प्रतन्यते ॥

एकीशमा त दौष्यन्तपुत्रको वंशवर्णन ।
गरिन्छ रन्तिदेवादि राजाको कीर्ति कीर्तन ॥
(२१)

द्वाविंशे तु दिवोदासवंशमुक्त्वाथ वर्णिताः ।
ऋक्षवंशे जरासन्धपार्थदुर्योधनादयः ॥

बाईशमा दिवोदासवंश भन्दै नृपादिको ।
ऋक्षवंश्य जरासन्ध पार्थदुर्योधनादिको ॥
(२२)

त्रयोविंशे त्वनोर्द्रुह्योस्तुर्वसोश्चान्वयः क्रमात् ।
यदोश्च वंशोऽनुक्रान्तो यावज्ज्यामघसम्भवः ॥

अनुद्रुह्यु र तुर्वादि भए नृवंशवर्धक ।
यदुको वंशविस्तार भयो ज्यामघकातक ॥
(२३)

चतुर्विंशे विदर्भस्य पुत्रत्रयसमुद्भवाः ।
वंशा नानामुखाः प्रोक्ता रामकृष्णोद्भवावधिः ॥

विदर्भका भए छोरा तीनोटा वंशवर्धक ।
भनिन्छ उनको वंश रामकृष्णोद्भवैतक ॥
(२४)

श्रीमद्भागवतमहापुराणको नवौँ स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।
हरि ॐ तत्सत्
श्रीकृष्णार्पणमस्तु



# दशौँ स्कन्ध

**श्रीगणेशाय नमः**

विश्वसर्गविसर्गादिनवलक्षणलक्षितम् ।
श्रीकृष्णाख्यं परं धाम जगद्धाम नमाम तत् ॥

दशमे दशमं लक्ष्यमाश्रिताश्रयविग्रहम् ।
क्रीडाद्यदुकुलाम्भोधौ परानन्दमुदीर्यते ॥

दशमे कृष्णसत्कीर्तिवितानाद्यानुवर्ण्यते ।
धर्मग्लानिनिमित्तस्तु निरोधो दुष्टभूभुजाम् ॥

प्राकृतादिश्चतुर्धा यो विरोधः स तु वर्णितः ।
तत्तत्प्रसङ्गतः सृष्टिसंहारादिनिरूपणैः ॥

कृता नवतिरध्याया दशमे कृष्णकीर्तये ।
आद्येश्चतुर्भिरध्यायैर्ब्रह्म प्रार्थनयाऽवनेः ।
भारं हर्तुं हरेर्जन्म सप्रसङ्गं निरूप्यते ॥

गोकुले मथुरायाञ्च द्वारवत्यां ततः क्रमात् ।
कृष्णलीला त्रिधा प्रोक्ता तत्तत्भेदैस्त्वनेकधा ॥

सपञ्चत्रिंशताध्यायैर्वृहद्वृन्दावनादिषु ।
गोकुले वसतो लीला वर्ण्यते सुरदुष्करा ॥

एकेन यमुनावारिण्यक्रूरेण कृता स्तुतिः ।
एकादशभिराख्याता लीला मधुवने कृता ॥

शेषैर्द्वारवती लीला तन्निर्माणादि वर्ण्यते ।
एवं नवतिरध्याया दशमे विशदार्थकाः ॥

तत्र तु प्रथमे कंसः स्वमृत्युं देवकीसुतात् ।
श्रुत्वा भीतोऽवधीत्तस्याः षड्गर्भानिति वर्ण्यते ॥

कृष्णावतारचरितश्रवणामृतनिर्वृतः ।
उक्तानुवादेनौत्सुक्याद्राजा पृच्छति तत्पुनः ॥

पैलोमा देवकी पुत्रबाट मृत्यु सुनीकन ।
कंसले देवकी पुत्र ६ मार्‍यो हुन्छ वर्णन ॥
(१)

द्वितीये कंसघाताय देवक्या गर्भगो हरिः ।
ब्रह्मादिभिः स्तुतः सा च सान्तित्वेति निरूप्यते ॥

कंस मार्न स्वयं कृष्ण देवकी गर्भमा गए ।
ब्रह्मादिले गरे स्वस्ति मातामा सान्त्वना दिए ॥
(२)

तृतीये निजरूपेण सम्भूतस्तु हरिः स्वयम् ।
पितृभ्यां संस्तुतो नीतः पित्रा भीतेन गोकुलम् ॥

तेस्रोमा विष्णुरूपैले अवतीर्ण भए हरि ।
पिताले गोकुलैमा नै लगेथे त्रासमा परी ॥
(३)

चतुर्थे चण्डिकावाक्यमाकर्ण्यातिभयाकुलः ।
दुर्मन्त्रिभिर्हितं मेने कंसो बालादिहिंसनम् ॥

चारौँमा चण्डिकावाक्य सुनी भई भयाकुलै ।
दुर्मन्त्रीको लिई राय मार्‍यो बालक कंसले ॥
(४)

पञ्चमे जातकं नन्दः सूनो कृत्वा महोत्सवम् ।
गत्वाथ मथुरां प्राप वसुदेवागमोत्सवम् ॥

नन्दले पुत्र पाएर गरे उत्सव भै खुशी ।
मथुरामा गई भेटे वसुदेव भए खुशी ॥
(५)

षष्ठे सख्युर्गिरा नन्दो व्रजं गच्छन्मृतां पथि ।
दृष्ट्वा तु राक्षसीं तस्या मृत्यु श्रुत्वाथ विस्मितम् ॥

सुनेर वाक्य साथीको फर्किए नन्दजी तब ।
मरेकी पूतना देखी परे छक्क सुनी सब ॥
(६)

उत्क्षिपन् शकटं व्योम्नि तृणावर्तमधः क्षिपन् ।
दर्शयन् विश्वमास्ये च कृष्णःक्रीडति सप्तमे ॥

गाडालाई दिए लात त्यो तृणावर्त मारियो ।
देखाए मुखमा विश्व कृष्णखेल शुरु भयो ॥
(७)

अष्टमे नामकर्मास्य बालक्रीडाकुतूहले ।
मृद्भक्षणाभियोगे च विश्वरूपं निरूप्यते ॥

आठौँमा राखियो नाम बाल्यलीला गरे अति ।
माटो खाई विराट्रूप देखाए जननी प्रति ॥
(८)

नवमे पयउत्सिक्ते गत्वा गोप्यथ तत्कृतम् ।
विलोक्य भाण्डभङ्गादि कृष्णं दाम्ना बवन्ध तम् ॥

तनूदराश्रितं विश्वं दृष्ट्वा विस्मित चेतसः ।
बन्धन द्वयङ्गुलापूर्त्या पूर्णतामन्वदर्शयत् ॥

नवौँमा दूध उम्लेको देखी गोपी गइन् त्यता ।
श्रीकृष्ण भाण्ड फोरेर दाम्लाले बाँधिए उता ॥
(१०)
एकादशे समागत्य वृन्दावनमथार्भकैः ।
वत्सान्पालयतानेन हतौ वत्सवकासुरौ ॥

वृन्दावन गए कृष्ण आफ्ना साथीहरू लिई ।
बाछापालक भै मारे वकवत्सासुरै दुई ॥
(११)
द्वादशे तु महासर्पवपुर्धरमघासुरम् ।
वत्सपालगिलं क्रुद्धो गलेऽहन्निति वर्ण्यते ॥

बाह्रौँमा त्यो पहासर्प भएकोथ्यो अघासुर ।
निल्यो बालक गोठाला मार्नुभो कृष्णले तर ॥
(१२)
त्रयोदशेऽहरद्ब्रह्मा वत्सपालांश्च मायया ।
तदा तत्सर्वरूपोऽब्दं कृष्णः पूर्ववदाचरत् ॥

माया रचेर ब्रह्माले गोठाला बत्स जो हरे ।
सर्वरूप भई कृष्ण वर्षौं काम सबै गरे ॥
(१३)
चतुर्दशेऽद्भुतं दृष्ट्वा पूर्वागन्तुकनिश्चयम् ।
अनीशः कर्तुमस्तौषीत्कृष्णं ब्रह्मा विमोहितः ॥

देखी अद्‌भुतको काम परी शरण कृष्णको ।
भई मोहित ती ब्रह्मा गरेथे स्तुति कृष्णको ॥
(१४)

ततः पञ्चदशे धेनुपालनं धेनुकार्दनम् ।
कालियक्ष्वेडतो गोपरक्षणञ्च निरूप्यते ॥

गाई चराउँदै जाँदा गरी धेनुकनिग्रहै ।
गरे गोपादिको रक्षा विषकालियबाट है ॥
(१५)

षोडशे कालियस्योक्तो निग्रहो यमुनाहृदे ।
तत्पत्नीभिःस्तुतेनाथ कृष्णेनानुग्रहः कृतः ॥

यमुनादहमा गर्दै सर्पको बलमर्दन ।
सुनेर स्तुति पत्नीको भए खुशी जनार्दन ॥
(१६)

नागं सप्तदशे नागालयं तं निरयापयत् ।
बन्धूस्त्वदुःखतः श्रान्तान् सुप्तांस्तत्र दवादपात् ॥

नागालयतिरै नागलाई निर्वासनै गरी ।
थाकेर वनमै सुत्ता डढेलो सल्कियो भरी ॥
(१७)

अष्टादशे ततो ग्रीष्मे वसन्तगुणलक्षिते ।
अघातयद्‌बलेनालं प्रलम्बं लीलया हरिः ॥

अठारौँमा ऋतुग्रीष्म आयो वसन्त नै सरि ।
प्रलम्ब बलले मारे सजिलैसँगले गरी ॥
(१८)

ऊनविंशे निविष्टन्तु गोपगोकुलमच्युतः ।
मुञ्जारण्यमरण्याग्ने ररक्ष तन्निपानतः ॥

उन्नीसमा सबै साथ जाँदा गोकुल अच्युत ।
मुञ्जका वनको आगो पिएथे हरिले स्वतः ॥
(१९)

विंशे प्राविट्शरच्छोभावर्णनेन वनोचिताः ।
प्रावृट्क्रीडा निरूप्यन्ते गोपरामयुजो हरेः ॥

वर्षासमयमा शोभा शरद्भैँ देखियो वन ।
गरे श्रीकृष्णले क्रीडा गोपालराम भैकन ॥
(२०)

एकविंशे शरद्रम्यवृन्दावने गतौ हरौ ।
तद्वेणुस्वनमाकर्ण्य गोपीभिर्गीतमीर्यते ॥

वृन्दावन गई वेणु बजाए कृष्णले जब ।
गोपीबाट भयो चर्चा वेणुगीत भयो तब ॥
(२१)

गोपीनां कामतः कृष्णे निःसीमप्रेमसङ्गमः ।
कात्यान्यर्चनोद्भूततत्प्रसादमहोदयः ॥

द्वाविंशे गोपकन्यानां वस्त्राहरण लीलया ।
वरं दत्वा गतः कृष्णो यज्ञशालामितीर्यते ॥

कात्यायनीव्रती गोपकन्याको वस्त्र नै हरी ।
वरदान दिई यज्ञशालातर्फ गए हरि ॥
(२२)

त्रयोविंशे ततो गोपैरन्नयाञ्चापदेशतः ।
तत्पत्न्यनुग्रहात्कृष्णो दीक्षितानन्वतापयत् ॥

यज्ञशाला गई मागे अन्न भो व्यर्थ झैँ तर ।
ब्राह्मणीले दिए पश्चात्ताप ब्राह्मणमा तर ॥
(२३)

चतुर्विंशे महेन्द्रस्य मखं व्यावर्त्य हेतुभिः ।
कृष्णः प्रवर्तयामास गोवर्धन मखोत्सवम् ॥

कृष्णले युक्तिकाद्वारा इन्द्रको मख रोक्नुभो ।
गोवर्धनमखैतर्फ नन्दको मन मोड्नुभो ॥
(२४)

पञ्चविंशे रुषा शक्रे व्रजनाशाय वर्षति ।
उद्धृत्य गिरिमासारादरक्षद्गोकुलं प्रभुः ॥

रिसाई इन्द्रले नास्न व्रज वर्षा गरे अति ।
कृष्णले गिरि ओढाई जोगाए व्रजको क्षति ॥
(२५)

षड्विंशे विस्मितान्गोपान्कृष्णस्याद्भुतकर्मभिः ।
नन्दो गर्गोक्तिमाश्राव्य तदैश्वर्यमवर्णयत् ॥

देखेर कृष्णको कार्य गोपादि छक्क नै परे ।
नन्दले गर्गको उक्ति जाहेर गोपमा गरे ॥
(२६)

सप्तविंशे तदालक्ष्य कृष्णस्य प्राभवं परम् ।
वर्ण्यते सुरभीन्द्राभ्यामभिषेकमहोत्सवम् ॥

प्रभाव कृष्णको देखी इन्द्रसुरभिले गई ।
अभिषेक गरे ठूलो अत्यन्त नम्र नै भई ॥
(२७)

अष्टाविंशे ततो नन्दानयनं वरुणालयात् ।
वैकुण्ठदर्शनं चाथ गोपानामनुवर्ण्यते ॥

वरुणालयबाटै नै ल्याएर नन्द कृष्णले ।
वैकुण्ठधाम देखाए गोपालकन कृष्णले ॥
(२८)

ऊनत्रिंशे तु रासार्थ मुक्तिप्रत्युक्तयो हरेः ।
गोपिभी रासंसरम्भे तस्य चान्तर्धिकौतुकम् ॥

मुक्तिप्रत्युक्त रासार्थ हरिले शुरु गर्नुभो ।
गोपीका साथमा रास शुरु भो कृष्ण लुक्नु भो ॥
(२९)

त्रिंशे विरहसन्तप्तगोपीभिः कृष्णमार्गणम् ।
उन्मत्तवन्ननियतं भ्रमन्तीभिर्वनेवने ॥

तीसौँमा विरही गोपी खोज्दै श्रीकृष्णजीकन ।
भई पागल ती सारा घुम्न लागे वनैवन ॥
(३०)

एकत्रिंशे निराशास्ता पुनः पुलिनमागताः ।
कृष्णमेवानुगायन्त्यः प्रार्थयन्ते तदागमम् ॥

बनी निराश ती गोपी फर्केर यमुनातिर ।
गीत गाउन ती थाले कृष्णदर्शन खातिर ॥
(३१)

द्वात्रिंशे विरहालापविक्लिन्नहृदयो हरिः ।
तत्राविर्भूय गोपीस्ताः सान्त्वयामास मानयन् ।।

स्वप्रेमामृतकल्लोलविह्वलीकृतचेतसः ।
सदयं नन्दयन् गोपीरुद्गतो नन्दनन्दनः ।।

सुनी विरह गोपीको हृदयार्द्र बनी हरि ।
सान्त्वना साथमा मान दिए भावुक भैँ गरी ।।

गोपीले पनि अत्यन्त प्रेमद्रवित भैकन ।
गरे स्वागत सत्कार सप्रेम अभिनन्दन ।।

(३२)

तत्रत्रिंशे ततो गोपीमण्डलीमध्यगो हरिः ।
प्रियास्ता रमयामास ह्रदिनीजलकेलिभिः ।।

गोपीमण्डलका बीच भएर नन्दनन्दन ।
रासक्रीडा गरे नाचे जलक्रीडा गरीकन ।।

(३३)

चतुर्विंशेऽहिना ग्रस्तं नन्दं हरिरमूमुचत् ।
विद्याध्रं चाङ्गिरः शापात् शङ्खचूडं तथाऽवधीत् ।।

रासोपदेशतः कामं किङ्करीकृत्य कामतः ।
अन्वगृह्णन् वशं निन्ये तथा विद्याधराधिपम् ।।

सर्पले ग्रस्त ती नन्द कृष्णले मुक्त नै गरी ।
अङ्गिराशप्त विद्याध्रशङ्खचूड गयो तरी ।।

रासकानामले काम बनाईकन नोकर ।
कृपा गरेर विद्याध्र पार्नुभो वश सत्वर ॥
(३४)
पञ्चत्रिंशे वनं याते कृष्णे गोकुलयोषितः ।
युग्मश्लोकानुगीतेन निन्युर्दुःखेन बासरान् ॥

गएका वन ती कृष्णलाई संम्झेर गोपिनी ।
जोडी भै गीत गाएर काट्थे दिन दुःखी बनी ॥
(३५)
षड्त्रिंशे तु हतेऽरिष्टे नारदोक्त्या बलाच्युतौ ।
वसुदेवसुतौ ज्ञात्वा कंसोऽक्रूरं समादिशत् ॥

अरिष्ट मारिए पश्चात् नारदैको कुरा सुनी ।
पठायो लिन अक्रूरै कंसले बल कृष्ण नी ॥
(३६)
सप्तत्रिंशे हते केशिन्यच्युतो भाविकर्मभिः ।
नारदेन स्तुतः क्रीडन् व्योमासुरमथावधीत् ॥

मारेथे कृष्णले केशी पछिका सब कार्य जो ।
भने नारदले खेल्दै मारेथे व्योम दैत्य जो ॥
(३७)
अष्टत्रिंशे यथा ध्यायन्नक्रूरो गोकुलं गतः ।
तथैव रामकृष्णाभ्यां गृहं नीत्वा सुसत्कृतः ॥

प्रातः केशीवधं वृत्ते द्वादश्यां निर्गते मुनौ ।
ततो व्योमे हतेऽक्रूरः सायं गोकुलमागमत् ॥

अठ्तीसमा निकै शोची गए अक्रूर गोकुल ।
रामकृष्ण दुवैले ती लगिए घर सत्कृतः ॥
(३८)

नवत्रिंशे पुरीं गच्छत्यच्युते गोपिकोक्तयः ।
अक्रूरेणाथ कालिन्द्यां विष्णु लोकस्य दर्शनम् ॥

जानलाग्दा पुरी रोए गोपी ती कृष्णमा गई ।
देखे अक्रूरले लोक वैकुण्ड यमुना गई ॥
(३९)

चत्वारिंशे ततोऽक्रूरः कृष्णं मत्वेश्वरेश्वरम् ।
प्रणम्य भक्त्या तुष्टाव सगुणागुणभेदतः ॥

ठाने अक्रूरले कृष्ण ठूला हुन् जगदीश्वर ।
गरे प्रणाम ली भक्ति गर्दै स्तुति परावर ॥
(४०)

एकचत्वारिंशकेऽहन् रजकं प्राविशन्पुरीम् ।
ततो वरानदात्तुष्टः सुदाम्नो वायकस्य च ॥

धोवी मारेर ती कृष्ण बिस्तारै नै पसे पुरी ।
सुदामाले सियो वस्त्र वरदान दिने गरी ॥
(४१)

द्विचत्वारिंशके कुब्जोन्नमनं धनुषो भिदा ।
वधस्तद्रक्षिणां कंसारिष्टं रङ्गोत्सवादि च ॥

कुब्जालाई गरी सोझी धनु भाँचे सिधै गई ।
मारे रक्षक तर्सेथ्यो कंस अरिष्ट सम्झिई ॥
(४२)

त्रिचत्वारिंशके हत्वा गजेन्द्रं रामकृष्णयोः ।
रङ्गप्रवेशसौभाग्यं चाणूरेण च भाषणम् ॥

श्रीरामकृष्णले मारे हात्ती कुवलयै जब ।
रङ्ग भित्र पसे हाँस्तै बोल्यो चाणूरले तब ॥
(४३)

चतुश्चत्वारिंशके तु मल्लकंसादिमर्दनम् ।
कंसयोषित्समाश्वासस्ताभ्यां पित्रोश्च दर्शनम् ॥

मल्ल आदि सबै मारी मारे कंस गईकन ।
सम्झाई कंसका पत्नी गरेथे पितृदर्शन ॥
(४४)

पञ्चचत्वारिंशकेऽथ पितृनन्दादिसान्त्वनम् ।
उग्रशेनाभिषेकश्च गुरौवासात्पुरागमः ॥

पिता नन्नादि सम्झाए उग्रशेन गरे नृप ।
गुरुबाट लिई शिक्षा फर्किए मथुरा तब ॥
(४५)

षट्चत्वारिंशके घोषमुद्धवं प्रेष्य तद्गिरा ।
यशोदानन्दयोश्चक्रे कृष्णः शोकापनोदनन् ॥

गए उद्धव घोषैमा कृष्णसन्देश नै लिई ।
यशोदानन्दको शोक हटाए शान्त्वना दिई ॥
(४६)

सप्तचत्वारिंशकेऽथ कृष्णादेशेन गोपिकाः ।
बोधयित्वोद्धवेस्तत्त्वमनुज्ञाप्यागमत्पुरीम् ॥

कृष्णको पत्र सन्देश गोपीलाई भनी ओरी ।
भक्तिको तत्त्व सम्झेर फर्के उद्धवजी पुरी ॥

(४७)

अष्टचत्वारिंशकेऽथ कृष्णः कुब्जामरीरमत् ।
अक्रूरस्य गृहं गत्वा तं गजाह्वयमाद्दिशत् ॥

कुब्जाका घरमा कृष्ण गई रमाइलो गरी ।
अक्रूर घर गै कृष्ण पठाए हस्तिनापुरी ॥

(४८)

ऊनपञ्चाशत्तमे तु गत्वाऽक्रूरो गजाह्वयम् ।
राज्ञः स्वभातृपुत्रेषु वुद्‌ध्वा वैषम्यमागमत् ।

हस्तिानापुर अक्रूर गए भेटे सबै अनि ।
राजाले पाण्डुका छोरा ठगेको बुझियो पनि ॥

(४९)

ततः पञ्चाशत्तमे तु जरासन्धभयादिव ।
कारयित्वाम्बुधौ दुर्गं तन्निनाय निजं जनम् ॥

डराएर जरासन्ध देखिन् जस्तो गरी हरि ।
जानुभो द्वारका बस्न समुद्र दुर्ग नै गरी ॥

(५०)

एकपञ्चाशत्तमेऽहन् मुचुकुन्ददृशा हरिः ।
यवनं मुचुकुन्देन स्तुतः सन्नन्वकम्पतः ॥

यवनेन्द्रसुतात्कालयवनाद्यदुभीषणात् ।
हरिर्हरगिरः स्वैरं पालनायापलायत ॥

कृष्णले यवनैलाई मुचुकुन्दाग्निले गरी ।
डढाई नृपकासाथ प्रसन्न हुनुभो हरि ॥

भागी यवनदेखिन् श्री द्वारकामा गईकन ।
मातापिता सबैलाई दिनुभो पूर्ण रक्षण ॥

(५१)

द्विपञ्चाशत्तमे धावन्भयादिव गतः पुरीम् ।
अन्वमोदत सन्देशं रुक्मिण्याद्विजवर्णितम् ॥

बाउन्नौँमा डराएझैँ भागेर द्वारका गई ।
सन्देश रुक्मिणीजीको मान्नुभो खुश नै भई ॥

(५२)

त्रिपञ्चाशत्तमे गत्वा विदर्भानद्भुतेहितः ।
रुक्मिणीमहरत्कृष्णो मिषतां द्विषतां बलात् ॥

त्रिपन्नमा गए कृष्णा विदर्भ रुक्मिणी लिन ।
शत्रुका बीचबाटै नै हर्नुभो रुक्मिणीकन ॥

(५३)

चतुष्पञ्चाशत्तमे तु जित्वा राज्ञोऽरिपक्षगान् ।
रुक्मिणञ्च विरूप्याथ भैष्म्याः पाणिं पुरेऽग्रहीत् ॥

चउन्नमा जिती सारा राजा ती शत्रु पक्षका ।
मुढी रुक्म गई द्वार रुक्मिणीसँग भो बिहा ॥

(५४)

पञ्चपञ्चाशत्तमे तु प्रद्युम्नोऽजनि कृष्णतः ।
शम्बरेणहृतः सोऽथ हत्वा तं कान्तयागमत् ॥

पचपन्न हुँदा जन्मे प्रद्युम्न कृष्ण पुत्र ती ।
हऱ्यो शम्बरले मारी फर्के कान्ता लिएर ती ॥
(५५)

षट्पञ्चाशत्तमे मिथ्याभियोगे मणिमाहरत् ।
कन्यां जाम्बवतः प्राप कृष्णः सत्राजितस्ततः ॥

छपन्नौँमा झुटो दोष लागेर मणिचोरको
पाए जाम्बवती सत्त्यभामा पत्नीहरू निको ॥
(५६)

सप्तपञ्चासत्तमे तु पुनः शतोधनोर्वधे ।
प्राप्तं स्म दुर्यशो मार्ष्टि कृष्णोऽक्रूराहृतान्मणेः ॥

सत्राजित मरे मार्ने शतधन्वा त मारियो ।
वदनाम भए कृष्ण अक्रूर मणि ल्याइयो ॥
(५७)

अष्टपञ्चाशत्तमे तु कृष्णः पञ्चकरेऽग्रहीत् ।
कालिन्दीं मित्रविन्दाञ्च सत्याभद्राञ्च लक्ष्मणाम् ॥

कृष्णको क्रमले अर्का पाँचोटीसँग भो बिहा ।
कालिन्दी मित्रविन्दा र सत्या भद्रा र लक्ष्मणा ॥
(५८)

ऊनषष्टितमे भौमं हत्वा तेनाहृता हरिः ।
कन्याःसहस्रशः प्राप पारिजातं दिवोऽहरत् ॥

मारे श्रीकृष्णले भौम थुनेका त्यसले सब ।
हजारौँ राजपुत्री र पारिजात हरे तब ॥
(५९)

अथ षष्टितमे कृष्णः परिहासेन रुक्मिणीम् ।
कोपयित्वा ततः प्रेम कलहे तामसान्त्वयत् ।।

साठीमा कृष्णले ठट्टा गरेर रुक्मिणीकन ।
रुवाए सान्त्वना साथ सम्झाए प्रेम दीकन ।।

(६०)

एकषष्टीतमे शौरेः पुत्रपौत्रादि सन्ततिः ।
अनिरुद्धविवाहे च रुक्मिणो रामतो हतः ।।

फैलिए कृष्णका धेरै छोरा नाति असङ्ख्यतः ।
अनिरुद्ध विहा गर्दा रुक्मिको हुन गो हत ।।

(६१)

द्वियुक्षष्टितमे प्रोक्तमनिरुद्धस्य रोधनम् ।
कन्यया रममाणस्य बाणेन बहुबाहुना ।।

अनिरुद्धोद्वहेऽन्यस्मिन् बाणयादवसंयुगे ।
श्रीकृष्णः श्रीहरं जित्वा बाणबाहूनथाच्छिनत् ।।

छोरीको प्रिय बाँधेथ्यो बाणले कृष्णका सुत ।
कृष्णशङ्करका बीच भएथ्यो युद्ध अद्भुत ।।

काटेथे बाणका हात कृष्णले सकियो व्यथा ।
अनिरुद्ध उषालाई गरेथ्यो बाणले विदा ।।

(६२)

त्रियुक्षष्टीतमे चाथ बाणयादवसङ्गरेः ।
स्तुतिर्ज्वरेण रुद्रेण बाणबाहुभिदो हरेः ।।

बाणयादवको युद्ध हुँदा श्रीकृष्णको स्तुति ।
गरेथ्यो ज्वर रुद्रैले यहाँ त्यो हुँछ संस्तुति ॥
(६३)

चतुःषष्टितमे कृष्णो नृगं पापादमोचयत् ।
ब्रह्मस्वहारिदोषोक्त्या राज्ञो दृप्तानशिक्षयत् ॥

कृष्णले नृगलाई जो गरेर पापमोचन ।
ब्रह्मस्वलिनुको पाप हुन गो सब वर्णन ॥
(६४)

पञ्चषष्टितमे रामश्चक्रे गोकुलमागतः ।
रममाणस्तु गोपीभिः कालिन्द्याः कर्षणं मदात् ॥

राम गोकुल आएर गोपीका साथ खेल्नुभो ।
कालिन्दीकन मातेर हलो हालेर तान्नुभो ॥
(६५)

षड्युक्षष्टितमे काशीं गत्वाऽहन् पौण्ड्रकं हरिः ।
तन्मित्रञ्च ततो वृत्तं सुदक्षिणवधादिकम् ॥

आफैँ कृष्ण गई काशी पौण्ड्रक नृप मार्नुभो ।
सुदक्षिणसखा उस्को कृष्णले फेरि मार्नुभो ॥
(६६)

सप्तषष्टितमे रामो गिरौ रैवतके मदात् ।
स्वैरं युवतिभिः क्रीडन्नवधीद् द्विविदं खलम् ॥

सतसठ्ठी हुँदा राम गिरि रैवतकै गई ।
युवतीसाथ खेलेर द्विविदै मार्नुभो गई ॥
(६७)

अष्टषष्टितमे साम्बे निरुद्धे कौरवैर्युधि ।
तद्विमोक्षाय रामेण गजाह्वयविकर्षणम् ॥

थुने कौरवले साम्ब युद्धमा रामले गई ।
हस्तिनापुर तान्नुभो हलोले क्षुब्ध नै भई ॥

(६८)

एकोनसप्ततितमे गार्हस्थ्यं प्रतिमन्दिरम् ।
कृष्णस्य नारदो दृष्ट्वा विस्मितोऽभूत् ततःस्तुवन् ॥

गार्हस्थ्य कृष्णको हेर्न द्वारका नारदै झरे ।
प्रत्येक घरमा कृष्ण देखेर स्तुति जो गरे ॥

(६९)

ततस्तु सप्ततितमे कृष्णस्याह्निककर्मणि ।
दूतनारदयो कार्ये कार्यमन्त्रविचारणम् ॥

कृष्णको दैनिकी भन्दै दूतनारदका सँग ।
वार्ता भै, लिनु सल्लाह मन्त्री उद्धवका सँग ॥

(७०)

अथैकसप्ततितम उद्धवस्य तु मन्त्रतः ।
इन्द्रप्रस्थं गते कृष्णे पार्थानां परमोत्सवः ॥

राजसूयमिषं कृत्वा भीमदुर्योधनादिषु ।
कलिमुत्पाद्य तद्द्वारा भूमारमहरत्प्रभुः ॥

सत्तरीमा त सल्लाह पाई उद्धवको हरि ।
इन्दप्रस्थ गए कृष्ण भयो उत्सव बेस्सरी ॥

राजसूय गराएर त्यसैका आडले तब ।
कुरु पाण्डु लडाएर भूभार हर्नुभो सब ॥
(७१)

ततो द्विसप्ततितमे राज्ञा कार्ये निवेदिते ।
दुजर्यं मागधं बुध्वा भीमेनाघातयद्धरिः ॥

गर्न दिग्जय राजाको काममा गई निर्भय ।
दुर्जयै मागधै ठानी भीमबाट गरे जय ॥
(७२)

ततस्त्रिसप्ततितमे मोचयित्वा नृपान् हरिः ।
राजार्हभोगैः स्वान्देशान् प्रस्थाप्य पुनरागमत् ॥

त्रिहत्तरौँ हुँदा राजा छुटाई ती सबैकन ।
आआफ्नो राज्य फर्काई फर्के फेरि जनार्दन ॥
(७३)

चतुर्युक्सप्ततितमे राजसूयक्रिया द्विजैः ।
अग्रपूजा प्रसङ्गेन चैद्यघातादि वर्ण्यते ॥

राजसूयमुखे हत्वा जरासन्धं तदन्तरे ।
चैद्यं तदन्तं कुर्वन्तं बीजं कलिमिवावपत् ॥

राजसूय गरे यज्ञ अग्रपूजा प्रसङ्ग ली ।
निन्दा गर्ने हुँदा चैद्य कृष्णबाट गयो मरी ॥

राजसूयमुखैमा नै जरासन्ध गरी जय ।
महाभारतको बीज रोपियो तब निर्भय ॥
(७४)

पञ्चयुक्सप्ततितमे यज्ञावभृथसम्भ्रमः ।
सुयोधनस्य चाक्षान्त्या मानभङ्गो दृशिभ्रमात् ॥

यज्ञावभृथ भो स्नान भयो रुष्ट सुयोधन ।
दृष्टिको भ्रमले गर्दा मान भङ्ग भईकन ॥

(७५)

ततःषट्सप्ततितमे वृष्णिशाल्वमहामृधे ।
द्युमद्गदाप्रहारेण रणात्प्रद्युम्ननिर्गमः ॥

सम्पाद्य धर्मराजस्य राजसूयमहोदयम् ।
निहत्य सौभराजादीनथोपारमदच्युतम् ॥

छ्यहत्तरमा वृष्टि शाल्वको युद्ध भो जब ।
द्युमद्गदाप्रहारैले प्रद्युम्न निस्किए तब ॥

सकी युधिष्ठिरी यज्ञ राजसूय सकीकन ।
सौभराजादि मारेर फर्किए श्रीजनार्दन ॥

(७६)

सप्तयुक्सप्ततितमे नानामायाविचक्षणः ।
कृष्णेनागत्य शाल्वस्तु हतं सौभञ्च चूर्णितम् ॥

सतहत्तरमा नाना मायाकुशल शाल्वको ।
कृष्णले गर्नुभो हत्या पार्नुभो चूर्ण सौभको ।

(७७)

ततोऽष्टसप्ततितमे दन्तवक्त्रविदूरथौ ।
हत्वा हरिः पुरे रेमे रामे सूतं ततोऽवधीत् ॥

हरि फर्कनु भो मारी दन्तवक्त्रविदूरथ ।
रामले सूतजी मारे अठहत्तरमा ततः ॥
(७८)
उनाशीतितमे रामो बल्वलं द्विजतुष्टये ।
निहत्य तीर्थस्नानाद्यै सूतहत्यामपानुदत् ॥

द्विजलाई खुशी पार्न मारे बल्वल रामले ।
तीर्थस्नान गरे हत्या गर्न मार्जन रामले ॥
(७९)
अथाशीतितमे कृष्णः श्रीदामानं गृहागतम् ।
सम्पूज्यापृच्छदर्थेप्सुं गुरुवासकथां मुदा ॥
असीमा कृष्णजी भेट्न श्रीदामाजी गए जब ।
पूजा गरी भयो वार्ता गुरुवासकथा तब ॥
(८०)
एकाशीतितमे सख्युर्जग्ध्वा पृथुकतण्डुलान् ।
श्रियं निर्मितवानिन्द्रदुर्लभान्तु तदाश्रमे ॥

कृष्णले कनिका खाए कोसेली मित्रको जब ।
दिए ऐश्वर्य इन्द्रैका निमित्त जो छ दुर्लभ ॥
(८१)
द्व्यशीतितम आगत्य कुरुक्षेत्र रविग्रहे ।
वृष्णीन् दृष्ट्वा मुदा भूपाश्चक्रुः कृष्णकथा मिथः ॥

श्रीदामसुहृदे कृष्णः प्रकन्प्यैन्द्रं पदं भुवि ।
नन्दादिसुहृदानन्दी कुरुक्षेत्रं जगाम सः ॥

बयासीमा कुरु क्षेत्र सूर्यग्रहणमा हरि ।
जानुभयो भए राजा खुशी कृष्णकथा गरी ॥

सुदामाकन इन्द्रैको ऐश्वर्य सब दीओरी।
नन्दादितुष्ट पारेर कुरुक्षेत्र गए हरि ॥
(८२)
त्र्यशीतितम एवञ्च स्त्रीणां कृष्णकथोत्सवे।
द्रौपद्यैः कृष्णभार्याभिरुक्ताः स्वस्वकरग्रहाः ॥

त्रियासीमा चल्यो कृष्णकथा नारीहरूसँग।
द्रौपदीले गरिन् चर्चा कृष्णपत्नी सबैसँग ॥
(८३)
चतुर्भिरधिकशिशितितमे मुनिसमागमे।
वसुदेवमखोत्साहबन्धुप्रस्थापनादिकम् ॥

चौरासीमा भए भेला मुनिसङ्गम नै भयो।
यज्ञ भो वसुदेवैको बिदाई नन्दको भयो ॥
(८४)
पञ्चाशिशितितमे रामकृष्णौ सम्प्रार्थितौ सुतौ।
पित्रे ज्ञानमथो मात्रे मृतान् पुत्रानयच्छताम् ॥

रामकृष्ण दुवै छोरालाई सम्प्रार्थना गरे।
दिए ज्ञान पितालाई मातामा मृत पुत्र रे ॥
(८५)
षडशीतितमे दम्भात्सुभद्रामर्जुनोऽहरत्।
गत्वा च मिथिलां कृष्णः स्वभक्तप्रियकृत्ततः ॥

हरेथे छलका साथ सुभद्रा गई अर्जुन।
मिथिलामा गई कृष्ण भेटे स्वभक्त नै कन ॥
(८६)

सप्ताशीतितमे नारायणनारदवादतः ।
वेदैः स्तुतैर्गुणालम्बा निर्गुणावधि वर्ण्यते ॥

वागीशा यस्य वदने लक्ष्मीर्यस्य च वक्षसि ।
यस्यास्ते हृदये संवित् तं नृसिंहमहं भजे ॥

सम्प्रदायविशुद्ध्यर्थं स्वीयनिर्बन्धयन्त्रितः ।
श्रुतिस्तुतिमितव्याख्यां करिष्यामि यथा मतिः ॥

श्रीमद्भागवतं पूर्वैः सारतः सन्निषेवितम् ।
मया तदुपसुस्पृष्टमुच्छिष्टमुपचीयते ॥

भएथ्यो वाद नै नारायण नारदसंस्तुति ।
निर्गुणी परमात्माको गरेथे वेदले स्तुति ॥
(८७)

अष्टाशीतितमे विष्णुभक्ताः कैवल्यमश्नुते ।
ततोऽर्वाग्देवभक्तस्तु विभूतिमिति वर्ण्यते ॥

कैवल्यमोक्ष नै हुन्छ विष्णुका भक्तको अनि ।
भनिन्छ देवता भक्त विभूतिजनको पनि ॥
(८८)

नवाशीतितमे देवः को महानिति संशये ।
परीक्ष्य विष्णोरुत्कर्षं मुनिभ्योऽवर्णयद्भृगुः ॥

देवतामा ठुलो को हो ? भन्ने शङ्का भई अनि ।
गर्दा जाँच भए विष्णु श्रेष्ठ नै सबमा पनि ॥
(८९)

चरमे तु पुनः प्रोक्ता कृष्णलीला समासतः ।
यदुवंशप्रसूतानामानन्त्यञ्च सकारणम् ॥

नब्बेमा कृष्णको लीला सङ्क्षेपमा भनीकन ।
सबै यादवको नाश भनिने छ सकारण ॥

(९०)

श्रीमद्भागवतमहापुराणको दशौँ स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।

हरि ॐ तत्सत्

श्रीकृष्णार्पणमस्तु



# एघारौँ स्कन्ध

## श्रीकृष्णाय नमः

तच्चरणकमल चिन्मकरन्दाय ।
भक्तजनमानसनिवासाय श्रीरामचन्द्राय ॥

विजयन्ते परानन्दकृष्ण पादरजस्स्रजः ।
या धृता मूर्ध्नि जायन्ते महेन्द्रादि महः स्रजः ॥

उक्तैकत्रिंशताध्यायैर्मुक्तिरेकादशे ततः ।
जायन्तेयेतिहासाद्यैः समासव्यासरूपतः ॥

नारदो वसुदेवाय समासेन न्यवर्णयत् ।
भगवानुद्धवायाथ विस्तरेणोपपत्तिभिः ॥

तत्र तु प्रथमेऽध्याये यदुवंशस्य संक्षयः ।
उपक्षिप्तो विरागाय मौसल व्यपदेशतः ॥

प्रवृत्तितः परानन्दकृष्णक्रीडानुवर्णिता ।
तन्निवृत्त्या परानन्द पदारोहोऽनुवर्ण्यते ॥

पैलो अध्यायमा नाश भनिन्छ यदुवंशको ।
कथा मुसलको ल्याई भनिनेछ विरागको ॥
(१)

द्वितीये निमिजायन्तसंवादेनाह नारदः ।
धर्मान्भागवतान्भक्त्या वसुदेवाय पृच्छते ॥

निमिजायन्तसंवाद भने नारदले सब ।
धर्मभागवती सोद्धा वसुदेवकनै तब ॥
(२)

मायातत्तरणब्रह्मकर्मप्रश्नचतुष्टये ।
तृतीये तूत्तरं दत्तमार्षभैर्मुनिभिः पृथक् ॥

माया निवृत्ति सद्ब्रह्म कर्म प्रश्न त चारको ।
दिए जबाफ नौ योगीहरूले ती विभिन्नको ॥
(३)

चतुर्थे त्ववतारेहा प्रश्नस्योत्तरमुक्तवान् ।
जयन्तीनन्दनो नाम्ना द्रुमिलो नवसप्तमः ॥

चारौँमा प्रश्न आएथ्यो अवतारादिको जब ।
सातौँ द्रुमिल योगीले दिए उत्तर ती सब ॥
(४)

पञ्चमे भक्ति हीनानां का निष्ठा को युगे युगे ।
पूजाविधिरिति प्रश्नद्वयस्योत्तरमुच्यते ॥

पाँचौँमा भक्तिहीनैको निष्ठा कस्तो हुने अनि ।
पूजाविधि दुई प्रश्न दिए उत्तर ती पनि ॥
(५)

षष्ठे ब्रह्मादिभिः स्तुत्वा गन्तुं विज्ञापितं हरिम् ।
उद्धवः प्रार्थयामास स्वधाम नय मामिति ॥

ब्रह्मादिले गरे बिन्ती कृष्णमा धाम फर्कन ।
गरे उद्धवले बिन्ती साथै लानोस् भनीकन ॥
(६)

सप्तमे तूद्धवस्यात्मज्ञानसिद्ध्यै हरिः स्वयम् ।
अवधूतेतिहासोक्तगुरुष्वष्टाववर्णयत् ॥

आत्मज्ञान बताएथे कृष्णले उद्धवैकन ।
अवधूतकथा आठ गरेथे गुरु वर्णन ॥

(७)

अष्टमेऽजगरादिभ्यो नवभ्यः शिक्षितं हरिः ।
अवधूतगिरा प्राह विवेकायोद्धवं प्रति ॥

अवधूत स्वयंले नै अजिङ्गरादि नौ गुरु ।
बताए, कृष्णले सोही उद्धव शिष्यमा अरू ॥

(८)

नवमे कुररादिभ्यो देहतश्चोपशिक्षितम् ।
श्रुत्वा यदुः कृतार्थोऽभूदिति कृष्णेन वर्णितम् ॥

चखेवा आदिले नौमा दिएथे ज्ञान जो तब ।
सुनी यदु भए तुष्ट, बताए कृष्णले सब ॥

(९)

कपोतमीनहरिणकुमारीगजपन्नगाः ।
पतङ्गः कुररश्चाष्टौ हेयाथ गुरवो मताः ॥

मधुकृन्मधुहर्ता च पिङ्गलाथ द्वयोस्त्रयः ।
उपादेयार्थविज्ञाने शेषाः पृथ्व्यादयो मताः ॥

तदवान्तरभेदश्च तत्रतत्र स्फुटीकृतः ।
अध्यायत्रितये चाष्टनवाष्टावीरिताः क्रमात् ॥

चतुर्विंशतिगुर्वाख्यालब्धसम्भावनाभुवः ।
उद्धवस्यात्मतत्त्वायै साधनोक्तिरतः परैः ॥

दशमे देहसम्बन्धात्संसृतिनात्मनः स्वतः ।
इत्येतद्वर्णयामास मतान्तर निरासतः ॥

चौवीस गुरुको शिक्षा बताए कृष्णले सब ।
देहसम्बन्धले घुम्छ आत्मा संसारमा तब ॥
(१०)

एकादशे तु बद्धानां मुक्तानां चाथ लक्षणम् ।
साधूनाञ्च तथा भक्तेर्लक्षणं हरिणेरितम् ॥

बद्धभक्तादि मान्छेको लक्षणादि र साधुको ।
भनेथे कृष्णले सारा साथै लक्षण भक्तिको ॥
(११)

द्वादशे साधुसङ्गस्य महिमा वर्णितः पुरा ।
कर्मानुष्ठानतत्त्यागव्यवस्था च ततः परम् ॥

साधुका सँग सत्सङ्ग महिमा भनियो सब ।
कर्मानुष्ठान तत्त्याग भनिन्छ क्रमले अब ॥
(१२)

त्रयोदशेऽथ सत्त्वस्य वृद्ध्या विद्योदयक्रमः ।
हंसेतिहासतश्चित्तगुणविश्लेषवर्णनम् ॥

बुद्धि शुद्ध भए हुन्छ ज्ञानवृद्धि भनीकन ।
हंसबाट भयो चित्त विवेक गुण वर्णन ॥
(१३)

चतुर्दशे परं श्रेयो भक्तिरेव न चेतरत् ।
इत्येतद्वर्ण्यते ध्यानयोगश्च सहसाधनैः ॥

कल्याणकारिणी भक्ति जस्ता छैनन् अरू कुनै ।
भनियो यसका ध्यानयोग हुन् सह साधनै ॥

(१४)

ततः पञ्चदशे प्रोक्ताः सिद्धयो धारणानुगाः ।
श्रीविष्णुपदसम्प्राप्तावन्तरायतया मताः ।

भनिन्छ पन्ध्रमा सिद्धि जुन हो धारणानुगा ।
विष्णुका पद लैजाने विनाबाधा सहायिका ॥

(१५)

षोडशे तु हरेराविर्भावयुक्ता विभूतयः ।
ज्ञानवीर्य प्रभावादिविशेषेणोपवर्णिताः ॥

अन्तश्चित्तेन यद्ध्यानमशक्यमकृतात्मनाम् ।
अतस्तद्योग्यतापत्त्यै विभूत्यादिनिरूपणम् ॥

एवं तावन्नवाध्यायमष्ट प्रश्ना निरूपिताः ।
ब्रह्मत्वसम्भवे तावत्सप्तमादि चतुष्टये ॥

बन्धमुक्त्योस्तु निर्धारे सद्भक्त्योश्च ततः परे ।
द्वादशेऽनन्तरं कर्म कृतित्यागव्यवस्थितौ ॥

हंसेतिहासतो योगनिष्ठायाञ्च त्रयोदशे ।
श्रेयः साधननिर्धारे ध्याने चैव चतुर्दशे ॥

धारणासिद्धिभेदे च प्रसङ्गेन निरन्तरे ।
उद्धवप्रश्नतो दत्तमुत्तरं हरिणोचितम् ॥

षोडशे भूतिविस्तारे द्वयोर्वर्णाश्रमव्रते ।
ज्ञानादिनिर्णये चातो यमादिनाञ्च निर्णये ॥

योगत्रयाधिकारे तु विंशे च तदनन्तरे ।
सत्त्वसङ्ख्याविवादे च पुंप्रकृत्योविवेचने ॥

जन्ममृत्युप्रकारे च द्वाविंशे दत्तमुत्तरम् ।
परापराधसहने चतुर्भिस्तदनन्तरैः ॥

सप्तविंशे क्रियायोगप्रश्ने तदुपवर्णनम् ।
अष्टाविंशे ततः प्रोक्ता ज्ञानयोगोपसंहृतिः ॥

संसारसम्भवप्रश्ने तन्मध्ये दत्तमुत्तरम् ।
तदशक्त्या पुनः प्रश्ने भक्तियोगपसंहृतिः ।
एवं प्रश्नोत्तरान्यत्र क्रमेणैतानि विंशति ॥

सोह्रौँमा विष्णुका धेरै विभूतिहरू छन् जुन ।
ज्ञानवीर्यप्रभावादि हुन् यस्का मुख्य लक्षण ॥
(१६)

ततः सप्तदशे पृष्ठे स्वधर्मे भक्तिलक्षणे ।
हंसोक्तं धर्ममन्वाह ब्रह्मचारिगृहस्थयोः ॥

सोधे उद्धवले धर्म भक्तिलक्षणले युत ।
हंसोक्त भनियो धर्म ब्रह्मचारीगृहस्थ त ॥
(१७)

अष्टादशेऽवदद्धर्मं वनस्थयतिगोचरम् ।
अधिकारविशेषेण विशेषञ्चापि तद्गतम् ॥

अठारौँमा भने धर्म सन्न्यासी वानप्रस्थको ।
अधिकारविशेषैले उत्कर्ष हुन्छ उक्तको ॥
(१८)

ज्ञानादे निर्णयः पूर्वं कृतो ह्याश्रमधर्मतः ।
अत्रोनविंशतितमे ज्ञानादेस्त्याग उच्यते ॥

ज्ञाननिर्देशका पैले भनियो धर्म आश्रम ।
ज्ञान त्यागादि सम्पूर्ण भनिने छ यथाक्रम ॥
(१९)

विंशे योगत्रयं प्रोक्तं भक्तिज्ञान क्रियात्मकम् ।
गुणदोषव्यवस्थार्थमधिकारिविभागतः ॥

तीनोटा योग बीसौँमा भक्तियोगक्रियात्मक ।
भनिन्छ गुणदोषादि अधिकारी विभागतः ॥
(२०)

एकवींशे क्रियाज्ञानभक्तिष्वनधिकारिणाम् ।
कामिनां द्रव्यदेशादिगुणदोषाः प्रपञ्चिताः ॥

भनिनेछ क्रियायोग भक्ति नै नाधिकारिको ।
कामीको द्रव्यदेशादि गुण या दोष आदिको ॥
(२१)

द्वविंशे तत्त्वसङ्ख्यानामविरोधविधोच्यते ।
पुंप्रकृत्योर्विवेकश्च जन्ममृत्युविधादि च ॥

तत्त्वको गणना गर्दै सबैमा अविरोध छ ।
पुं र प्रकृतिको भेद जन्ममृत्युविधादि छ ॥
(२२)

त्रयोविंशे तिरस्कारसहनोपाय ईर्यते ।
भिक्षुगीतप्रकारेण मनसः संयमो धिया ॥

दुर्जनोपद्रवो नूनं दुःसहो हि महीयसाम् ।
अतश्चतुर्भिरध्यायैः सहनोपायवर्णनम् ॥

तेईशमा तिरस्कार भनिन्छ सहने कुरा ।
भिक्षुगीत प्रकारैले मनसंयमको कुरा ॥

उपद्रो दुर्जनैको ता सकिन्न सहनैकन ।
अध्याय चारले हुन्छ त्यसको सब वर्णन ॥
(२३)

चतुर्विंशे तु साङ्ख्येन मनोमोहो निवार्यते ।
आत्मनः सर्वभावानामागमापाय चिन्तया ।
स्वपदद्वन्द्वभक्तानामद्वन्द्वत्वाय संयमम् ।
चित्तस्योक्त्या पुनः कृष्णः साङ्ख्यमत्राह तत्कृते ॥

साङ्ख्यले मनको मोह गर्ने छ अपसारण ।
आफ्नू र अन्य साराको आगमापायचिन्तन ॥
(२४)

पञ्चविंशे स्वनैर्गुण्य प्रतिपत्यै निरूप्यते ।
चित्तप्रभवसत्त्वादिगुणवृत्तिरनेकधा ॥

पच्चीसौँमा स्वनैर्गुण्य भनिन्छ ज्ञानको कुरा ।
जन्मेका मनबाटै नै सत्त्वादि मनका कुरा ॥
(२५)

षड्विंशे योगनिष्ठाया विघातो दुष्टसङ्गतः ।
साधुसङ्गेन तन्निष्ठापराकाष्ठेति वर्ण्यते ॥

योगिनो योगविभ्रंशः सङ्गतः सम्भवेदिति ।
सर्वथा तन्निवृत्त्यर्थमैलगीतं वितन्यते ॥

योगनिष्ठा हुने नाश दुष्टको भै कुसङ्गत ।
साधुका सङ्गले बढ्छ पराकाष्ठा भई स्वतः ॥

योगीको योगविभ्रंश सङ्गतैले हुने पनि ।
निवृत्ति सर्वथा गर्न भनिन्छ ऐलगीत नि ॥
(२६)

सप्तविंशे क्रियायोगः सद्यचित्तप्रसादकः ।
सर्वकामाप्तिहेतुश्च साङ्गः प्रोक्तः समासतः ॥

रागाद्याकुलचित्तानां कुतोऽसङ्गादिसम्भवः ।
इति कृष्णार्चनं भद्रमनुस्मृत्यानुपृच्छति ॥

क्रियायोग गरी चाँडै सन्तुष्ट चित्त बन्दछ ।
सर्वकामाप्तिको हेतु सङ्क्षिप्तमा भयो सब ॥

रागाद्याकुलचित्तैको असङ्गत असम्भव ।
कृष्णको अर्चनाले नै सबै बन्दछ सम्भव ॥
(२७)
अष्टविंशे तु यः पूर्वं विस्तरेणोपवर्णितः ।
ज्ञानयोगः पुनश्चासौ समाहृत्य निरूप्यते ॥

जो पैले पूर्ण विस्तारपूर्वकै भनियो सब ।
ज्ञानयोग त्यसैलाई भनिन्छ छोट्करी अब ॥
(२८)
ऊनत्रिंशे तु यः पूर्वं विस्तरेण निरूपितः ।
भक्तियोगस्तमेवाह स्वभक्ताय समासतः ॥

अतिक्लेशमिवालक्ष्य योगेऽसङ्गैकसम्पदि ।
सुखोपायं पुनः कृष्णमुद्धवः परिपृच्छति ॥

ऊनन्तीशौँमा जो पैले भनियो अति विस्तृत ।
भक्तियोग त्यसैलाई भनिने छ समासतः ॥

अति कष्ट हुने सम्झी योगमुक्त्यर्थ सम्पद ।
सुखले कसरी जान्ने भनी सोद्धछन् नि उद्धव ॥
(२९)
त्रिंशे तु प्रागुपक्षिप्त मौसलच्छलतो हरिः ।
स्वधाम गन्तुमन्विच्छन्संजहार निजं कुलम् ॥

विरागाय पुरा घोरमुपक्षिप्तं हि मौसलम् ।
कथावसाने तत्रैव विशेषं परिपृच्छति ॥

पैले समुद्रमा क्षिप्त छल मौसलको गरी ।
स्वधाम जानका लागि नास्छन् वंश निजै हरि ॥

तीव्र वैराग्यका निम्ति ल्याई मुसलको कथा ।
अन्त्यमा सोद्धछन् राजा कुल संहारको व्यथा ॥
(३०)

एकत्रिंशे स्वकं धाम जगाम भगवानितः ।
तमेवानुययुः प्रीत्या वसुदेवादयस्ततः ॥

देवान्यदून्विधायादौ भूयो देवान्विधाय च ।
श्रीकृष्णः स्वेच्छया धाम स्वतन्वैव समाविशत् ॥

एकतीश पुगी कृष्ण स्वधामतर्फ जानुभो ।
आफू गए पछि प्यारा वसुदेवादि लानुभो ॥

द्यौता यदु बनाएर फेरि द्यौतै सबै गरी ।
स्वेच्छाले देहकै साथ स्वधाम पाल्नुभो हरि ॥
(३१)

श्रीमद्भागवतमहापुराणको एघारौँ स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।
हरि ॐ तत्सत्
श्रीकृष्णार्पणमस्तु



# बाह्रौँ स्कन्ध

## श्रीगोपालकृष्णाय नमः

श्रीगुरुं परमानन्दं वन्द आनन्दविग्रहम् ।
यस्य सन्नतिमात्रेण चिदानन्दायते वपुः ॥

जयन्ति परमानन्द कृपाऽपाङ्गलसद्दृशः ।
या नित्यमनुवर्तन्ते सम्पदो विगतादृशः ॥

उक्तत्रयोदशाध्यायैर्द्वादशे त्वाश्रयः सतः ।
अधिष्ठानावधित्वाभ्यामाश्रयश्चेश्वरः सतः ॥

उक्तो लयावधित्वेन प्राकृतात्यन्तिके लये ।
अधिष्ठानतया चोक्तो महापुरुषवर्णने ॥

तत्रादौ षड्भिरध्यायैः शुकः प्राह परीक्षिते ।
शेषैस्तत्राखिलान्याह सूतः पृष्टोऽथ सत्रिभिः ॥

स्वाश्रयश्रवणे कार्यो न विलम्बो मनीषिणा ।
इत्येतत्कालवैषम्यं चतुर्भिस्तावदुच्यते ॥

एवं भूते सोमवंशे मुकुन्द –
स्वैरक्रीडावर्णिताथो स एव ।
वंशो भावी वर्ण्यते कृष्णभक्तिं,
मुक्त्वा मुक्त्यै वर्त्म नास्तीति वक्तुम् ॥

तत्र तु प्रथमे भावि मागधान्वयभूमिपान् ।
कलिप्रभावतः प्राह संस्कारादिमलीमसान् ॥

पैलो अध्यायमा राजा भावी मगधवंशका ।
हुन्छन् संस्कारले शून्य कलिप्रभावले फिका ॥
(१)
द्वितीये तु कलेर्दोषोवृद्धौ कल्क्यवतारतः ।
अधर्मिष्टे जने नष्टे पुनः कृतयुगागमः ॥

वृद्धि भै कलिको दोष भगवान् कलि भैकन ।
अधर्मी सब नाशिन्छन् हुन्छ सत्ययुगागम ॥
(२)
तृतीये भूमिगीतैश्च राज्यदोषादि वर्ण्यते ।
कलौ च दोषभूयिष्ठे दोषहन्त्री हरेर्नतिः ॥

तेस्रोमा भूमिको गीत राज्य दोषादि वर्णन ।
कलिका दोष धेरै ती नास्छ त्यो हरिकीर्तन ॥
(३)
चतुर्थे तु चतुर्धोक्ता लया नैमित्तिकादयः ।
तत्र संसारनिस्तारो हरिकीर्त्यैव वर्ण्यवे ॥

भनिन्छ लय चारोटा नित्य नैमित्तिकादिको ।
हरिकीर्तनले नास्छ दुःख संसार आदिको ॥
(४)
पञ्चमे तु समासेन परब्रह्मोपदेशतः ।
राज्ञस्तक्षक संदंशान्मृत्युभीतिनिवारणम् ॥

पाँचौँमा अति नै सूक्ष्म ब्रह्मोपदेश दीकन ।
सर्पदंशनको त्रास राजाको भो निवारण ॥
(५)

षष्ठे परीक्षितो मोक्षः सर्पहोमादि तत्सुतात् ।
वेदशास्त्रविभागोक्तौ त्रिवेदिव्यासवर्णनम् ॥

परीक्षित् ती तरे छोराबाट भो होम सर्पको ।
भनिन्छ वेदविस्तार छैटौँमा ती त्रिवेदको ॥
(६)

सप्तमेऽर्थविस्तारः पुराणव्यसनं ततः ।
पुराणलक्षणादीनि फलं भागवतश्रुतेः ॥

अथर्वको छ विस्तार पुराण रचना अनि ।
पुराण लक्षणै साथ फल त्यो सुन्नुको पनि ॥
(७)

अष्टमे तु तपश्चर्या मार्कण्डेयस्य मोहकैः ।
कामादिभिरसम्मोहो नरनायणस्तुतिः ॥

तपश्चर्या र मार्कण्डी जो मोहात्मक सम्प्रभ ।
भनिन्छ कामनाजन्य मोह श्रीस्तुतिको क्रम ॥
(८)

नवमे भगवन्मायादिदृक्षोर्दर्शनं मुहुः ।
मायाशिशोलयाब्धौ च मुनेर्निर्वेशनिर्गमैः ॥

नवौँमा भगवन्माया हेर्न अत्यन्त तम्सिए ।
माया शिशु लयाब्धिमा हेरेर मुनि निस्किए ॥
(९)

दशमे शिव आगत्य मुनेस्तुष्टो वरानदात् ।
तेन साकमतिप्रीत्या समाभाष्य सभाजयन् ॥

दशौँमा शिव आएर खुशी भए दिए वर ।
मुनिले प्रेमका साथ गरे स्तुति सविस्तर ॥
(१०)

एकादशे तु पूजार्थं महापुरुषवर्णनम् ।
रवेर्व्यूहस्य चाख्यानं प्रतिमासं पृथक् पृथक् ॥

एघारौँमा त पूजार्थ महापुरुषवर्णन ।
गर्दै श्रीसूर्यको व्यूह प्रतिमासादि वर्णन ॥
(११)

द्वादशे तु पुराणोक्तसर्वार्थानुक्रमः कृतः ।
प्रथमस्कन्धमारभ्य प्राधान्येन समासतः ॥

बाह्रौँमा भनियो सारा पुराणमा क्रमैसित ।
प्रथमस्कन्धबाटै त्यो भनिन्छ छोट्करी सित ॥
(१२)

त्रयोदशे पुराणानां सङ्ख्यामाह यथाक्रमम् ।
दानं दानस्य महात्म्यं श्रीमद्भागवतस्य च ।

तेह्रौँमा क्रमले भन्दै सङ्ख्या पुराणको अनि ।
दानको अनि माहात्म्य श्रीमद्भागवतै पनि ॥
(१३)

श्रीमद्भागवतमहापुराणको बाह्रौँ स्कन्धको अवतरणिकाको
समछन्दमा गरिएको नेपाली अनुवाद सकियो ।

हरि ॐ तत्सत्

श्रीकृष्णार्पणमस्तु



# लेखकका प्रकाशित ग्रन्थहरू

## आध्यात्मिक

१. ज्ञान र भक्ति – २०६३
२. रासपञ्चाध्यायी – २०६४
३. ब्रह्मसाक्षात्कार – २०६५
४. उपनिषत्सार – २०६७
५. ब्रह्मसूत्रसार – २०६७
६. मणिरत्नमाला अनुवाद – २०६७
७. अध्यास र चतुःसूत्री – २०६८
८. वेदान्तपरिभाषासार – २०६८
९. श्रीकृष्णाय वयन्नुमः – २०६९
१०. परमसत्य – २०६९
११. अध्यास – २०६९
१२. अद्वैतसिद्धिः १ खण्ड – २०६९
१३. अद्वैतसिद्धिः २ खण्ड – २०७०
१४. अन्तिम उपदेश – २०७०
१५. ब्रह्मविद्या – २०७०
१६. अजातवाद – २०७१
१७. पराविद्या – २०७१
१८. श्रीमद्भागवतमहापुराणको अवतरणिकाको नेपाली अनुवादसहित – २०७४

## लौकिक

१. उसैको लागिको समीक्षा – २०२६
२. ऋतुमन्थन, समीक्षा – २०४४
३. सिर्जनाका फूलहरू, कविता – २०५१
४. बहादुर शाह, खण्डकाव्य – २०५२
५. श्रद्धाञ्जलि, शोककाव्य – २०५२
६. गीत तथा भजनहरू – २०५२
७. अमरसिंहको चिट्ठी, काव्य – २०५३
८. क्रान्तिदूत, खण्डकाव्य – २०५३
९. विविधयात्रा, कविता – २०५५
१०. यात्रैयात्रा, कविता – २०५८
११. पत्रैपत्र, कविता – २०५९
१२. पृथ्वीविजय, काव्य – २०६२
१३. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
१४. अनुस्मृति (जीवनयात्रा) – २०६७
१५. वन्दना – २०६८
१६. कविशतक – २०६८
१७. अष्ट्रेलियाको दैनिकी – २०६९
१८. आभास – २०७२
१९. कवितामञ्जरी – २०७४

प्रकाशोन्मुख ग्रन्थहरू :
१. ऋतेज्ञानान्नमुक्ति, २. अष्टावक्रगीता अनुवाद,
३. अवधूतगीता अनुवाद, ४. सङ्क्षेपशारीरकसार


ISBN 993703596-1
9789937035965